بسم الله الرحمن الرحيم

शुरु अल्लाहको नाम बाट जो अत्यान्त करुणामय र परम दयालु छन् |

# इस्लामको वैज्ञानिक विश्लेषण


लेखक

आई .ए इब्राहिम

**अनुवादक**

डा. इमरान अन्सारी



مكتب دعوة وتوعية الجاليات بعنيزة

هاتف : ٠٦٣٦٤٤٥٠٦فاكس:٠٦٣٦٢٤٥٠٦

جوال :٠٥٥٧١٤٠٠١٧ ص.ب:٨٠٨

प्रकाशक

इस्लामिक सेन्टर उनैजा

अल कसिम सउदि अरब

पो. बक्स :८०८

फोन : ३६४४५०६.फेक्स :३६२४५०६

# विषयसूचि

# अध्याय-३

## इस्लामसम्बधी सामान्य जानकारीहरू

## बिनम्र निवेदन

आदर्णीय पाठकगण !

यो किताब (इस्लामको वैज्ञानिक विश्लेषण )

नेपाली  भाषा मा दमेसेज पब्लिकेशन काठमांडौ नेपाल बाट ईस्लामिक संघ नेपाल कोनिगरानी मा प्रकाशित गरिएको थियो , अब यसलाई केहि फेरबदल गरि इस्लामिक सेन्टर उनैजह् ले प्रकाशित गर्दै छ ,यस पुस्तकमा कुनै किसिम को त्रुटीहरु फेला परेमा यो नम्बर मा फोन गर्नु हुन अनुरोध  गर्दछौं

सम्पर्क नम्बरहरु

००९६६ ६३६४४५०६,फ्याकस : ००९६६ ६३६२४५०६

मुजिबुर रहमान नेपाली

०५५६५४३९०३

सहयोगी मित्र :अहमद गुरुङ नेपाली

०५९०७६४७८९

# भुमिका

यस पुस्तकमा इस्लामको वैज्ञानिक विश्लेषण तथा सामान्य र संक्षिप्त परिचय प्रस्तुत गरिएको छ। यसमा तीन अध्यायहरू छन्।

**पहिलो अध्याय** "इस्लामको सत्यताका केहि प्रमाणहरू" मा इस्लामको विषयमा प्राय:

सोधिने केहि प्रमुख प्रश्नहरूको उत्तर दिइएको छ। जस्तै :

– के कुरआन वास्तवमा ईश्वरद्वारा अवतरित शब्दहरू नै हुन् ?

– के मुहम्मद (स.) ईश्वरद्वारा पठाइएका पैगम्बर नै हुन् ?

– के इस्लाम वास्तवमै ईश्वरद्वारा प्रदत्त एकमात्र धर्म हो ?

यस अध्यायमा कुल पाँच प्रकारका प्रमाणहरू प्रस्तुत गरिएका छन् :

(१) कुरआनमा वैज्ञानिक चमत्कारहरूको वर्णन :

यस खण्डमा हालै मात्र गरिएका त्यस्ता वैज्ञानिक खोजहरूको वर्णन गरिएको छ जस्को उल्लेख कुरआनमा पाइन्छ जुनकि आजभन्दा चौध सय वर्ष अघि अवतरित भएको हो।

(२) कुरआनको जस्तो एउटैमात्र अध्याय पनि रचना गरि देखाउन कुरआनको चुनौति :

कुरआनमा अल्लाहले मानवलाई चैलेन्ज गरेका छन् कि यदि सक्छौ भने कुरआनको जस्तो एउटै मात्र अध्याय पनि रचना गरेर देखाऊ। चौध शताब्दि बितिसक्दा पनि कसैले यो चैलेन्ज स्वीकार्न सकेको छैन, यद्यपि कुरआनमा यति सानो अध्याय पनि छ जसमा मात्र दशवटा शब्दहरू छन्।

(३) कुरआनका भविष्यवाणिहरू जुन कालान्तरमा सत्य प्रमाणित भए :

करुआनमा कयौं भविष्यवाणिहरू गरिएका छन्। कालान्तरमा ती भविष्यवाणिहरू सत्य प्रमाणित भए, जस्तै पर्सियनहरूमाथि रोमनहरूको विजय।

(४) मुहम्मद (स.) द्वारा प्रदर्शित चमत्काहरू :

महुम्मद (स.) ले कयौं चमत्कारी घटनाहरू पद्रशर्न गरे। ती घटनाका साक्षी जनसाधारण थिए।

(५) मुहम्मद (स.) को सरल जीवन :

यसले प्रमाणित गर्दछ कि मुहम्मद (स.) नक्कली पैगम्बर थिएनन् जसले तात्विक लाभ, यश र शक्तिका लागि यो नाटक गरेका होऊन्।

यी प्रमाणहरूबाट निम्नलिखित निस्कर्षहरू निस्कन्छन् :

– कुरआन अक्षरश: ईशवाणी हो।

– मुहम्मद (स.) ईश्वरका सच्चा पैगम्बर हुन् ।
– ईस्लाम नै ईश्वरको सत्य धर्म हो ।
कुनै धर्म सत्य हो कि होइन भन्ने कुरो जान्नको लागि केवल भावना र परम्पराहरूमाथि विश्वास गर्न सकिन्न । यसको लागि विवेक, बुद्धि र तर्कहरू प्रयोग गरिनुपर्दछ । पैगम्बरहरू पठाउादा अल्लाह (ईश्वर) ले उनीहरूको हातमा केहि चमत्कारहरू साथै यस्ता प्रमाणहरू पनि दिए जसबाट यो सिद्ध होस् कि उनीहरू वास्तवमै अल्लाहद्वारा पठाइएका हुन् र यसर्थ उनीहरूले ल्याएको धर्म पनि सत्य हो ।

**दोश्रो अध्याय,** “इस्लामका केहि फाईदाहरू” अन्तर्गत व्यक्तिलाई इस्लामबाट हुने केहि फाईदाहरूको उल्लेख गरिएको छ, जस्तै :
क अनन्त स्वर्गको प्राप्ति,
ख नर्कको आगोदेखि मुक्ति,
ग वास्तविक आनन्द र आन्तरिक शान्ति
घ पूर्वका सबै पापहरूको क्षमादान

**तेश्रो अध्याय,** “इस्लाम सम्बन्धी सामान्य जानकारीहरू” ले इस्लामका बारेमा केहि जानकारीहरू उपलब्ध गराउनुको साथै यस धर्मप्रति सृजना भएका भ्रमहरूको निवारण
गरेको र प्रायः सोधिने केहि प्रश्नहरूको उत्तर दिएको छ । जस्तै :
– आतंकवादबारे इस्लामको के दृष्टिकोण छ ? र
– इस्लाममा नारीहरूको के स्थान छ ? आदि ।

## अध्याय-१
# इस्लामको सत्यताका केहि प्रमाणहरू

अल्लाहले आफ्नो अन्तिम सन्देष्टा मुहम्मद (स.) लाई यस्ता चमत्कारहरू र प्रमाणहरका साथ पठाए जसबाट यो प्रमाणित हुन्छ कि उनी अल्लाहद्वारा पठाइएका सच्चा सन्देष्टा हुन् । त्यसैगरी, आफ्नो अन्तिम ग्रन्थ कुरआनको समर्थनमा पनि अल्लाहले अकाट्य प्रमाणहरू र चमत्कारहरू प्रस्तुत गरेका छन् जसबाट यो ग्रन्थ साच्चै ईशवाणी नै हो भन्ने कुरा सिद्ध हुन्छ र यो कुरा प्रष्ट हुन्छ कि यो कुनै मानवद्वारा रचना गरिएको कदापि हुन सक्तैन । यस अध्यायमा यिनै प्रमाणहरू प्रस्तुत गरिएका छन् ।

## *१. कुरआनमा वैज्ञानिक चमत्कारहरूको वर्णन*

कुरआन अल्लाहको शब्दशः वाणी हो जुन फरिश्ता जिब्रईल (अ.) को माध्यमबाटसन्देष्टा मुहम्मद (स.) माथि अवतरित गरिएको थियो । मुहम्मद (स.)ले

ती शब्दहरू याद गरे र  पछि आफ्नासाथीहरू द्वारा कलमबद्ध गराए । ती साथीहरूलेस्मरण गरिकन लेखिसकेपछि मुहम्मद (स.) लाई सुनाएर त्यसलाई सच्याउाथे । पुनश्चः मुहम्मद (स.) ले पनि प्रतिवर्ष फरिश्ता जिब्रईल (अ.) लाई कुरआन पढेर सुनाइ पुनरावलोकन गराउाथे । पुनरावलोकनको यो कार्य मुहम्मद (स.) को जीवनको अन्तिम वर्षमा दुई पटक भयो । अवतरित भएदेखि आजसम्ममा मुसलमानहरूको विशाल संख्याले सम्पूर्ण कुरआन अक्षरशः कण्ठ पारिसकेको छ । कोहि कोहिले त यो काम दश वर्षको अल्पायुमै गरेका छन् । यत्तिका शताब्दीहरूमा कुरआनको एउटै अक्षरसम्म पनि परिवर्तन भएको छैन । आजभन्दा चौधसय वर्षअघि प्रकट भएको कुरआनमा यस्ता तथ्यहरूको पनि उल्लेख पाइन्छ जुन कि वैज्ञानिकहरूले हालै मात्र पत्ता लगाउन वा प्रमाणित गर्न सकेका हुन् । यसले के सिद्ध गर्छ भने कुरआन निश्चय नै अल्लाहकै वाणि हो र यो मुहम्मद (स.) अथवा अन्य कुनै व्यक्तिद्वारा रचना गरिएको कदापि हुन सक्तैन । यसबाट यो पनि प्रमाणित हुन जान्छ कि मुहम्मद (स.) अल्लाहद्वारा पठाइएका एक सच्चा सन्देष्टा हुन् ।

आजभन्दा चौधसय वर्षअघि कुनै व्यक्तिले ती तथ्यहरूको खोजी कसरी गर्न सक्थ्यो जुन हालै मात्र वैज्ञानिकहरूले अत्याधुनिक र जटिल यन्त्रहरूको माध्यमबाट गर्न सकेका छन् ? तसर्थ कुरआन मानव रचना कदापि हुन सक्तैन । कुरआनमा उल्लेखित त्यस्ता केहि वैज्ञानिक तथ्यहरूको विवरण यस प्रकार छ :

## क. कुरआनमा मानव-भ्रुण को विकासको उल्लेख

करु आनमा मानव-भ्रणुको कमिक विकासको बारेमा अल्लाहले भन्छन् :
**"हामीले मानवलाई माटोबाट निमार्ण गर्‍यौं । त्यसपछि उसलाई एउटा थोपामा परिणत गरी निर्धारित स्थानमा दृढ ताका साथ स्थिर गरायौं । अनि त्यस थोपा लाई "अलका" -जुका, भु न्डिएका वस्तु, रक्तपिण्ड) मा परिणत गर्‍यौं, अनि "अलका" लाई एउटा मुदगा" (चपाइएको जस्तो वस्तु बनायौं ।** (१) (करु आन, २३ :१२-१४)
अरबी भाषाको अलका भन्ने शब्दका तीन अर्थहरू छन् : (१) जुका (रगत चुस्ने , (२) झुन्डिएको वस्तु, र (३) रक्तपिण्ड ।

मानव-भ्रुणको अलका अवस्थालाई जुकासंग तुलना गर्नुको कारण ती दुईका आकार-प्रकारको समानता हो (२)

जुन चित्र १ मा देख्न सकिन्छ । साथै यस अवस्थामा चित्र १: जुका र मानव-भ्रुण को अलका अवस्थाका आकृतिहरूमा समानता (जुकाको चित्रण, *Human Development..., Moore & Others* पृ. ३७ *"Integrated Principles of Zoology," Hickman,* बाट । मानव भ्रणु को चित्रण, *The Developing Human," Moore & Persaud, 5th ed.* पृ स. ७३ बाट)

भ्रणुले आमाको रक्तबाटै भोजन प्राप्तगदर्छ र यस अर्थमा भ्रणुको व्यवहार रगतचुस्ने जुकाजस्तै हुन्छ ३ । अलकाको अर्को अर्थ हो झुन्डिएको वस्तु । चित्रहरू २ र ३ मा मानवभ्रुणको अलका अवस्थालाई आमाको गर्भाशयमा झुन्डिएको देख्न सकिन्छ ।

चित्र २ : यस चित्रमा मानवभ्रुणको अलका अवस्थालाई आमाकोगभार्शयमा झु न्डिएको अवस्थमा देखाइएको छ । *("The Developing Human" Moore & Persaud, 5th ed.* पृ स. ६६)

अलका : शब्दको तेस्रो अर्थ हो रक्तपिण्ड । मानव-भ्रुण र यसका थैलीहरूको बाहिरी स्वरूप एउटा रक्तपिण्ड जस्तै हन्छ । यसको कारण भ्रुणको यस अवस्थामा त्यसभित्र सापेक्षिक रूपमा रक्तको अत्यधिक मात्रा हुनु हो४ (चित्र ४हेर्नुहोस् ।

चित्र ३ : यस सूक्ष्म चित्रणमा भ्रुण (*B* द्वारा चिन्हित) को अलका अवस्थालाई आमाको गर्भाशयमा झुन्डिएको देख्न सकिन्छ । भ्रुणको वास्तविक लम्बाई ०.६ मि.मि. छ । *("History," Leeson & Leeson,* पृ.सं. ४७९ बाट )

साथै यस अवस्थामा भ्रुणभित्र रगत स्थिर रहन्छ, रक्तसंचार तेश्रो हप्ताबाट मात्र शुरू हुन्छ५ । तसर्थ भ्रुणको यो अवस्था एउटा रक्तपिण्ड जस्तै हुने भयो ।

चित्र ४ : अलका अवस्थामा भ्रुणको रक्तसञ्चार प्रक्रिया
*("The Developing Human, Moore, 5th ed.,* पृ.सं. ६५)

यस प्रकार अलका शब्दका तीनवटै अर्थहरू मानव-भ्रुणको त्यस अवस्थाको विवरणसंग ठ्याक्कै मेल खान्छन् ।

कुरआनको उपयर्क्त श्लोक मा मानव-भ्रुणनको अर्को अवस्थालाई मुदगा भनिएको छ । अरबी भाषाको मुदगा शब्दको अर्थ हो चपाइएको वस्तु । चुइंगमको एक टुक्रा मुख मा हालरे चपाएपछि बनेको आकारको तुलना मानव-भ्रुणको मुदगा अवस्थासगं गर्ने हो भने ती दुइ मा कयौं समानताहरू भेटिन्छन् । भ्रुणको मुदगा को पिठ्युको अंशमा रहेको Somites को उपस्थितिले यसको स्वरूप दाँतका चिन्हहरू भएको चपाइएको वस्तु जस्तै देखिन्छ६ । ( चित्रहरू ५ र ६ हेर्नुहोस् ।

आजभन्दा चौध सय वर्षअघि हजरत मुहम्मद (स.) ले यी कुराहरू कसरी जान्न सके जबकि वैज्ञानिकहरूले हालैमात्र यी तथ्यहरू फेला पार्न सकेका छन् ?

त्यस बेला न त शक्तिशाली सूक्ष्मदर्शकयन्त्रहरू थिए न अन्य विकसित उपकरणहरू नै । Hamm र Leeuwonhoek सर्वप्रथम १६७७ मा (मुहम्मद (स.) भन्दा ९०० वर्ष पछि) सूक्ष्मदर्शकयन्त्र द्वारा मानव शुक्रकिट देख्न सफल भएका हुन् । त्यसबेला उनीहरूको मूल धारणा के थियो भने त्यस शुक्रकीटमा पूर्व निर्मित मानवको सूक्ष्म रूप रहेको हुन्छ जुन चाहिं स्त्री गर्भासयमा स्थानान्तरित भएपछि पूर्ण मानवमा विकसित भएर जान्छ ।

चित्र ५ : मुदगा अवस्थाको मानवभ्रूण । पिठ्यु मा *Somites* को उपस्थितिले चपाइएको वस्तु जस्तो आकृति प्रदान गरेको हो । *("The Developing uman," Moore ७ Persaud, 5th ed.,* पृ.सं. ८२)

चित्र ६ : (*A* ) भ्रुणको मुदगा अवस्था र (*B*) चपाइएको चुइगंमका आकृतिहरूको समानता

प्रोफेसर Keith Moore शरीर विज्ञान (Anatomy) र भ्रुण विज्ञान (Embryology)का विश्वप्रसिद्ध वैज्ञानिक हुन् । उनको रचना "The Developing Human" को अनुवाद विश्वका आठ भाषाहरूमा गरिसकिएको छ । यस रचनालाई उपर्युक्त विषयमा सन्दर्भग्रन्थको हैसियत प्राप्त छ । संयुक्त राज्य अमेरिकामा सिङ्गो व्यक्तिद्धारा लेखिएको सर्वश्रेष्ठ पुस्तकको पुरस्कार यसलाई प्राप्त भएको छ । प्रो. Moore क्यानाडाको टोरन्टो विश्वविद्यालयमा Anatomy and Cell Biology का प्रोफेसर हुनु हुन्छ । सन् १९८४ मा

क्यानाडाको Anatomy विषयको सर्वप्रतिष्ठित पुरस्कार .C.B. Grant Award उनैलाई प्रदान गरियो । उनी कतिपय संघ संस्थाहरूका परिचालक रहिआएका हुन् । जस्तै : Canadian and American Association of Anatomists र Council of the Union ofBiological Science इत्यादी ।

सन् १९८१ मा सउदी अरबको दम्मामममा सातौं मेडिकल कन्फ्रेन्समा भाग लिदै प्रो. Moore ले भने, "कुरआनमा मानव-विकासका बारेमा उल्लेखित तथ्यहरूको व्याख्या गर्न पाउँदा साह्रै खुशी लागेको छ । कुरआनका ती उक्तिहरू मुह म्मद (स.) लाई ईश्वरबाटै प्राप्त भएको हुनु पर्छ भन्ने कुरोमा मलाई रत्तीभर सन्देह छैन । किनभने ती कुराहरूको पत्तो त वैज्ञानिकहरूले हालै मात्र लगाउन सफल भएका हुन् । यसबाट के स्पष्ट हुन्छ भने मुहम्मद (स.) पक्कै पनि ईश्वर (अल्लाह) का सन्देशवाहक हुनु पर्छ ।"
प्रो. Moore लाई एउटा प्रश्न गरिएको थियो । "त्यसो भए के त कुरआन ईश्वर (अल्लाह) को वाणी हो ?" उनको उत्तर थियो, "मलाई यो स्वीकार गर्न कुनै अप्ठ्यारो लाग्दैन ।"
अर्को सम्मलेनमा प्रो. Moore ले विचार व्यक्त गरे, "मानव- भ्रुणको Staging Classification प्रकिया साह्रै जटिल छ किनभने विकासको क्रममा भ्रुणमा लगातार परिवर्तन भइरहेको हुन्छ । तसर्थ कुरआन र सुन्नत (मुहम्मद (स.) का काम र कथनहरू) मा उल्लेखित वाक्यांशहरूको आधारमा एउटा नयाा वर्गीकरण प्रणाली विकसित गर्नु उचित देखिन्छ ।"
"प्रस्तावित प्रणाली सरल, बहुव्यापक र भ्रुणविद्या (Embryology) को वर्तमान ज्ञान अनुरूप छ । विगत चार वर्षको कुरआन र हदीस (मुहम्मद (स.) का काम र भनाईहरू) को गहन अध्ययनबाट मानव भ्रुणलाई वर्गीकरण गर्ने यो नयाँ प्रणाली सामुन्ने आएको हो । यो प्रणाली यस अर्थमा विस्मयकारी छ कि यसको उल्लेख सातौं शताब्दीमै भइसकेको थियो । यद्यपी भ्रुणविद्याका संस्थापक अरिस्टोटलले कुखुरीको फुलमाथिको प्रयोग द्वारा चौथो शताब्दी ईसा पूर्व मै अनभुव गरिसकेका थिए कि भ्रुण-चल्लाहरू बिभिन्न चरणहरू पार गर्दै विकसित हुन्छन् तथापि उनी ती चरणहरू (Stages) को विवरण जान्न र बताउन सफल भएनन् । भ्रुणविद्याको इतिहासबाट के थाहा हुन्छ भने बीसौं शताब्दी आइपुग्दासम्म पनि मानव भ्रुणको विकास-चरणहरू र त्यसकोवर्गीकरण(Classification)का बारेमा वैज्ञानिकहरूलाई थोरै मात्र थाहा थियो ।
तसर्थ कुरआनमा यस विषयका बारेमा जे भनिएको छ त्यो चाहि विज्ञानबाट उद्धृत गरिएको भनेर मान्न सकिदैन । यसको एउटामात्र विश्वसनीय व्याख्या हुन सक्छ र त्यो हो– यी विवरणहरू अल्लाहले स्वयं मुहम्मद (स.) लाई बताइ दिएका हुन् । मुहम्मद (स.) नितान्त अनपढ भएका हुनाले विज्ञान पढेर यी कुरा पत्ता लगाएको हुन सक्ने भनेर मान्ने प्रश्न नै उठेन७ ।"

**ख. कुरआनमा पर्वतहरूको विषय**

Earth नामक पुस्तक संसारका कतिपय विश्वविद्यालयहरूमा एउटा सन्दर्भग्रन्थको हैसियतले पढाइन्छ । यस पुस्तकका लेखकहरूमध्ये Frank Press एक हुन् । उनी संयुक्त राज्य अमेरिकाको Academy of Sciences का अध्यक्ष हुन् । विगतमा उनी पूर्व राष्ट्रपति
जिम्मी कार्टरका वैज्ञानिक सल्लाहकार रहि सकेका छन् । उनको पुस्तकमा लेखिएको छ कि पर्वतका जराहरू (Roots) हुन्छन्८ । यी जराहरू जमीनमा निकै गहिरो गाडिएका हुन्छन् ।

यस अर्थमा पवर्त हरूको आकार चुकुल (Peg) जस्तो हुन्छ। (चित्रहरू ७, ८ र ९ हेर्नुहोस् ।

चित्र ७ : पवर्त का गहिरा जराहरू (*Earth, Press & Siever,*पृ.सं.४१३)
चित्र ८ : पवर्त का जमीनमा गाडिएका चुकुल (*Peg*) जस्ता जराहरू *(Anatomy of the Earth*
*Cailleux,* पृ.सं.२२०)

चित्र ८ : पवर्त का जमीनमा गाडिएका चुकुल (*Peg*) जस्ता जराहरू *(Anatomy of the Earth Cailleux,* पृ.सं.२२०)

चित्र ९ : गहिरा जराहरूको कारणले चुकुल (*Peg*) जस्तो आकार लिएको पर्वत हरू देखाउने अर्को चित्र *("Earth Science" Tarbuck & Lutgens*, पृ.सं. १५८)

कुरआनमा पर्वतहरूको वर्णन निम्न शब्दमा गरिएको छ :

**“के हामीले यस पृथ्वीलाई ओछ्यान र पवर्त लाई चुकुल जस्तो बनाएका हैनौं ?” (कुरआन ७८:६ र ७)**

आधुनिक भू-विज्ञानले प्रमाणित गरेको छ कि पर्वतहरूका जराहरू भूईमा गहिरा गाडिएका हुन्छन् । कुनै कुनै ठाउामा यिनको गहिराई भूईमाथिको पर्वतको उचाईभन्दा कैयौं गुना बढी हुन्छ९ । यसकारण पर्वतहरूको यस अवस्थालाई चुकुल (Peg) भन्ने शब्दले राम्ररी चित्रण गर्छ । विज्ञानको इतिहासबाट के थाहा हुन्छ भने पवर्त का गहिरा जराहरू पनि हुन्छन् भन्ने परिकल्पना उन्नाइसौं शताब्दीको अन्त्यतिर मात्रै मान्यता प्राप्त गरेको हो१० ।

पृथ्वीको सतहको धरातललाई स्थिर राख्नमा पनि पर्वतहरूको ठूलो भूमिका छ११ । यसले पृथ्वीको कम्पनलाई नियन्त्रणमा राख्छ । अल्लाहले कुरआनमा भनेका छन्:

**“र उनले पर्वतहरूलाई भूईमा दृढताकासाथ गाडिदिएका छन् ताकि यो तिमीहरूसंगै नहल्लियोस् ।” (कुरआन, १६:१५)**

आधुनिक सिद्धान्त अनुसार पर्वतहरूले पृथ्वीलाई स्थिर राख्ने काम गर्छ । पृथ्वीलाई स्थिरता प्रदान गर्ने पवर्त हरूको यो भूमिका सन् १९६० पछि मात्रै Plate Tectonics को सिद्धान्तको आधारमा राम्ररी बुझ्न थालिएको हो१२ ।

के मुहम्मद (स.) को युगमा पर्वतहरूको वास्तविक आकार प्रकारका यी तथ्यहरू जान्न भौतिक रूपमा सम्भव थियो ? के त्यसबेला कसैले कल्पना गर्न सक्थ्यो कि पृथ्वीमाथि ठिङ्ग उभिएका विशाल पर्वतहरूको भूईमुनि पनि जरा हुन सक्छन् ? आधुनिक भू-विज्ञानले यस विषयमा कुरआनको सत्यता प्रमाणित गरिदिएको छ ।

के मुहम्मद (स.) को युगमा पर्वतहरूको वास्तविक आकार प्रकारका यी तथ्यहरू जान्न भौतिक रूपमा सम्भव थियो ? के त्यसबेला कसैले कल्पना गर्न सक्थ्यो कि पृथ्वीमाथि ठिङ्ग उभिएका विशाल पर्वतहरूको भूईमुनि पनि जरा हुन सक्छन् ? आधुनिक भू-विज्ञानले यस विषयमा कुरआनको सत्यता प्रमाणित गरिदिएको छ ।

## ग. ब्रह्माण्ड-सृष्टिको विषयमा कुरआनको भनाई

विश्व व्युत्पत्तिको आधुनिक विज्ञानले अवधारणा तथा अवलोकनद्वारा प्रष्ट पारेको छ कि एकताका यो सम्पूर्ण ब्रह्माण्ड एउटा धुवााको बादल (अर्थात् एउटा अति धमिलो, घना र तातो ग्यास) बाहेक केहि थिएन१३ । यो अवधारणा आधुनिक Cosmology का सिद्धान्तहरूमध्ये को एक हो । वैज्ञानिकहरू अहिले त्यस धुवााको अवशेषबाटबनेको नक्षत्रहरूको अवलोकन गर्न सक्छन् (चित्रहरू १० र ११ हेर्नुहोस् ।

चित्र १० : बह्रमाण्ड बनाउने धुवाँको अवशेषबाट बन्दै गरेको एउटा नक्षत्र *(Nebula_ ("The Space Atlas," Heather & Henbest,* पृ.सं.५०)

चित्र ११ : *Lagon Nebula,* लगभग ६० प्रकाश वर्षको व्यास भएको ग्यास र धुलोको बादल । *("Horizons, Exploring the Universe," Seeds, Plate 9)*

अहिले राती आकाशमा चम्किने ताराहरू पनि कुनै बेला यो व्रह्रमाण्डजस्तै त्यही धुवााका अंश थिए । अल्लाहले कुरआनमा भनेका छन् :

**"अनि उनी आकाशतिर फर्किए जुनबेला यो धुवाँ थियो...... ।"** (कुरआन, ४१:११)

यो पृथ्वी र माथिल्लो आकाश (सुर्य, चन्द्र, ताराहरू, ग्रहहरू, आकाशगङ्गा आदि) त्यही धुवााबाट बनेको हुनाले यो निष्कर्ष निकाल्न सकिन्छ कि पृथ्वी र आकाश एकताका जोडिएका थिए । पछि त्यही धुवााबाट बन्दै एकअर्काबाट अलग्गिए । अल्लाहले कुरआनमा भनेका छन् :

**"के अविश्वासीहरूलाई थाहा छैन कि आकाश र पृथ्वी एकअर्कासंग जोडिएका थिए अनि हामीले तिनलाई अलग्यायौं ।"** (कुरआन)

प्रो. Alfred Kroner विश्वका एकजना ख्यातिप्राप्त भू-वैज्ञानिक हुन् । मेन्ज विश्वविद्यालय जर्मनीमा भू-विज्ञानका प्रोफेसर, उनी भन्छन्, "मुहम्मद (स.) को युग र वासस्थानलाई विचार गर्दाखेरि मेरो विचारमा यो प्राय: असम्भव छ कि उनलाई ब्रह्माण्डको साझा उत्पत्ति जस्ता विषयहरूको बारेमा थाहा थियो किनभने यो कुरा वैज्ञानिकहरूले अत्याधुनिक उपकरणहरूको माध्यमबाट हालै मात्र पत्ता लगाउन सकेका हुन्१४ ।" उनी फेरी भन्छन्, "जसलाई आजभन्दा १४०० वर्षअघि आणविक भौतिक विज्ञानको बारेमा केहि थाहा थिएन त्यस व्यक्तिले पृथ्वी र आकाशको साझा उत्पत्ति जस्ता विषयका बारेमा आफ्नै ज्ञानको आधारमा जान्न सकेका होलान् भन्ने कुरो म मान्न सक्तिन१५ ।"

## घ. कुरआनमा मस्तिष्क (Cerebrum) को उल्लेख

कुरआनमा एकजना दुष्ट अविश्वासी (जसले मुहम्मद (स.) लाई काबामा नमाज पढ्नबाट रोकेको थियो को बारेमा अल्लाहले भनेका छन् :

**"उसलाई सावधान गरिदेऊ, ऊ आफ्नो (दुष्कर्मबाट) रोकिएन भने हामी उसलाई नासिया (टाउकोको सामुन्नेको भाग) बाट समात्ने छौं । झुठा र पापी नासिया बाट ।"** (कुरआन, ९६:१५-१६)

कुरआनले टाउकोको सामुन्नेको भागलाई झुठा र पापी भनेर किन भनेको होला ? त्यस व्यक्तिलाई नै झुठा र पापी किन भनेन ? टाउकोको सामुन्नेको भाग र झुठ-पापमा के सम्बन्ध छ ?

टाउकाभित्र गिदीको अगाडिपट्टिको भागमा हेर्ने हो भने मस्तिष्क (Cerebrum) को refrontal Area भेटिन्छ (चित्र १२ हेर्नुहोस् ।

चित्र १२ : मस्तिष्कको देब्रे अधार्शकां काय- कारी क्षत्रे हरू
*(Functional Areas) ("Essentials of Anatomy & Physiology" Seeley & Others* पृ.२१०)

मस्तिष्कको यस अंशको कामका बारेमा स्वास्थ्य-विज्ञानले के भन्छ ?

Essentials of Anatomy & Physiology भन्ने पुस्तकमा यस अंशको बारेमा लेखिएको छ, "चालका सम्बन्धमा पूर्व-योजना बनाउने, प्रेरणा प्रदान गर्ने तथा शुरूआत गर्ने काम मस्तिष्कको सामुन्नेको अंश (Frontal Lobes) को अगाडिपट्टिको भागले गर्दछ जसलाई Prefrontal Area भनिन्छ१६ ।" पुस्तकमा अगाडि भनिएको छ, "प्रेरणा प्रदान गर्ने भएको हुनाले मस्तिष्कको यो भाग आक्रमण गर्ने प्रवृत्तिको केन्द्र पनि मान्न सकिन्छ१७ ।"

तसर्थ सत्कर्म र दुष्कर्मको योजना बनाउने तथा सो कामको शुरूआत गर्ने दायित्व मस्तिष्कको यसै भागको हो र झुठो बोल्ने कि साचो भन्ने प्रेरणा पनि मस्तिष्कको यसै अशंबाट पाइन्छ । त्यसैले कुनै व्यक्ति झुठो बोल्छ र पाप गर्छ भने
उसको मस्तिष्कको उपरोक्त भागलाई झुठा र पापी भनेर वर्णन गर्न उचित नै देखिन्छ जसरी कुरआनमा भनिएको छ,...... झूठा र पापी नासिया ।

प्रो.Keith Moore का अनुसार मस्तिष्कको Prefrontal Area को उपरोक्त कार्य वैज्ञानिकहरूले हालै मात्र (गत ६० वर्ष भित्रमा) पत्ता लगाउन सकेका हुन्१८ ।

## ङ. कुरआनमा सागर र नदीहरूमाथि टिप्पणी

आधुनिक विज्ञानले के पत्ता लगाएको छ भने दुई सागरहरूको संगमस्थलमा तिनीहरूको बीचमा एउटा सीमारेखा हुन्छ । यस सीमारेखाले ती दुई सागरहरूलाई
छुट्याउने काम गर्छ । फलतः तिनीहरूका आ-आफ्नै तापमान, नुनिलोपना तथा घनत्व हुन्छन्१९ । जस्तै भूमध्य सागरको पानी अट्लान्टिक महासागरको पानीभन्दा न्यानो, नूनिलो र कम घनत्वपूर्ण हुन्छ । जिब्राल्टरको सिल माथिबाट अटलान्टिक महासागरमा पसे पछि भूमध्य सागरको पानी सयौं किलों मटरसम्म लगभग १००० मीटरको गहिराईमा बग्छ । यसको न्यानो, नुनिलो र कम घनत्वपूर्ण पानी, माथि र मुनिबाट बग्ने अट्लान्टिक महासागरको पानीदेखि मानौं एउटा नदेखिने विभाजकद्वारा छुट्याइएको होस्२० ।
(चित्र १३ हेर्नुहोस् ) ।

चित्र १३ : जिब्रल्टरको सिलमाथिबाट भमू ध्यसागरको पानीको अटलान्टिक महासागरमा पव्रेश । तापमान सेन्टिग्रेड मा । *("Marine Geology," Kuenen,* पृ.४३)

विशाल तरङ्गहरू, कडा धाराहरू र ज्वारभाटाहरू समेतले यस नदेखिने विभाजकलाई भत्काई ती दुई पानीहरूलाई मिसाउन सक्तैनन् ।

कुरआनमा भनिएको छ कि संगमस्थलमा दुई सागरहरूको बीचमा एउटा सीमारेखा छ जसलाई ती सागरहरूले अतिक मण गदर्नैन् । अल्लाहका शब्दहरू हुन् :

**"उनले दुई सागरहरूलाई एकअर्कासंग भेट्न स्वतन्त्र गरिदिएका छन् । तिनीहरूको बीचमा एउटा सीमारेखा छ । उनीहरूले अतिक्रमण गर्दैनन् ।"** (कुरआन, ५५ : १९-२०)

तर ताजा र नुनिलो पानीको बीचको विभाजकको बारेमा वर्णन गर्दाखेरि कुरआनले सीमारेखाका साथ-साथै एउटा अलग्याउने पर्खालको उल्लेख पनि गर्दछ ।

अल्लाह भन्छन्, **"बगिरहके ा पानीका दुई समुदाय, एउटा गुलियो र पेययोग्य, अर्को नूनिलो र टर्रो, लाई स्वतन्त्र गरिदिने उनी नै हुन् । र उनले तिनीहरूको बीचमा एउट सीमारेखा र अलग्याउने पर्खाल बनाई दिएका छन् ।"** (कुरआन, २५:५३)

प्रश्न उठछ कि ताजा र नूनिलो पानीको विभाजनको चर्चा गर्दाखेरि त कुरआनले पर्खालको कुरा गऱ्यो तर दुई सागरहरूको विभाजनको चर्चा गर्दा यसको कुरो किन गरेन ?

आधुनिक विज्ञानबाट थाहा भएको छ कि मुहान (Esturary) मा जहाँ नदीको ताजा पानी समुद्रको नूनिलो पानीमा गएर मिसिन्छ, परिस्थिति दुई सागरहरूको संगम स्थलको परिस्थिति भन्दा भिन्नै हुन्छ२१ । Estuary मा ताजा र नुनिलो पानीलाई एउटा विभाजन-क्षेत्र, Pycnocline Zone ले अलग्याएको हुन्छ । यस Pycnoline Zone को पानीको नूनिलोपना ताजा पानी र नूनिलो पानीको नूनिलोपनाभन्दा फरक हुन्छ२२ । (चित्र १४ हेर्नुहोस् )

यी जानकारीहरू तापमान, नूनिलोपना, घनत्व, अक्सिजनको घुलनशिलता आदि नाप्ने अति उन्नत उपकरणहरूको माध्यमद्वारा हालै मात्र प्राप्त भएका हुन् ।

चित्र १४ : मुहान *(Estuary)* को नुनिलोपना देखाउने रेखा चित्रण । यसमा ताजा पानी र नूनिलो पानी बीचको विभाजन-क्षेत्र *(Zone of Separation)* देखाइएको छ । *("Introductory Oceanography, Thrumann,* पृ.३०१)

दुई समुद्रहरूको संगमस्थलमा तिनका पानीहरूको बीचको भिन्नता मानव आँखाले देख्न सक्तैन । हाम्रो आँखाले त्यस सम्मिश्रणलाई समान नै देख्छ । त्यस्तै मानव आाखाले मुहान (Esturary) को पानीको तीन क्षेत्रहरूमा विभाजन– ताजा पानी, नूनिलो पानी र विभाजन-क्षेत्र (Zone of Separation) को पानी पनि देख्न सक्तैन ।

## च. कुरआनमा गहिरा समुद्र र आन्तरिक तर·हरूको वर्णन

अल्लाहले कुरआनमा भनेका छन् :

**"...(अविश्वासीहरूको अवस्था) गहिरो समुद्रमा भएको अन्धकार जस्तै छ। त्यो तरगंहरूले छोपिएको छ जसमाथि (अरू) तर·हरू छन्, जसमाथि बादलहरू छन्। एकमाथि अर्को अन्धकार। (यहाँसम्म कि) आफ्नै हात पनि देख्न सक्तैनन्।" - कुरआन, २४:४०)**

यस श्लोकमा गहिरा

सागर र समुद्रहरूमा भएको अन्धकारको चर्चा गरिएको छ जहाँ कि आफ्नै हात देख्न पनि गाह्रो हुन्छ। समुद्र र सागरहरूमा करीब २०० मीटरको गहिराईमुनि अन्धकार शुरू हुन्छ। यहाँ पुगेपछि प्रकाश प्रायः शुन्य हुन जान्छ२३। (चित्र १५

चित्र १५ : समुद्रको सतहबाट करीब ३-३० प्रतिशत सूर्य-प्रकाश परावर्तित हुन्छ। पहिलो २०० मीटरसम्म नीलो बाहेक प्राय सातवटा रङ्गहरू, एक पछि अर्को सोसिएर बिलिन हुदै जान्छन्। *("Ocean,"Elder & Pernetta,* पृ.२७)

१००० मीटरको गहिराईमा पुगे पछि प्रकाश पटक्कै हुँदैन। पनडुब्बी र विशेष उपकरणको सहायता बिना ४० मीटर भन्दा तल डुबुल्की लगाउन सकिदैन। २०० मीटर गहिराईको अन्धकारमा विशेष उपकरणहरूको सहयोगबिना मानिस बााच्न सक्तैन। यी आधुनिक प्रविधिको सहायताले गहिरो समुद्रमा डुबुल्की लगाउन हालैमात्र सफल भएपछि वैज्ञानिकहरूले यस अन्धकारको विषयमा जानकारी पाउन सकेका हुन्। यिनै खोजका आधारमा उपरोक्त श्लोकमा "...... **गहिरो समुद्रमा ....त्यो तर·हरूले छोपिएको छ, जसमाथि (अरू) तर·हरू छन् जसमाथि बादलहरू छन्"** भन्ने शब्दावलीको अर्थ बुझ्न पनि सजिलो भएको छ। अर्थात् समुद्र र सागरको पानी तरङ्गहरूले छोपिएको छ। यी तरगंह रू माथि तरगंहरूको अर्को तह रहेको छ। तरगंहरूको यो दोस्रो तह भनेको हाम्रो आँखाले देख्ने पानीको सतहमाथिका तरङ्गहरू हुन् किनभने उपरोक्त श्लोकमा यस दोस्रो तह माथि बादलहरू भएको भनिएको छ। तर तरगंहरूको पहिलो तह भनेर केलाई भन्न खोजिएको होला ?

वैज्ञानिकहरूले हालसालै खोज गरेका छन् कि सागरहरूमा आन्तरिक तरङ्गहरू (Internal Waves) हुन्छन् । यी आन्तरिक तरङ्गहरू भिन्न घनत्वहरू भएका तहहरूको बीचमा हुन्छन्२४ । (चित्र १६ हेर्नुहोस् ।

चित्र १६दुई भिन्न घनत्वहरू भएका पानीका तहहरू बीचका आन्तरिक तरङ्गहरू । तल्लो तह माथिल्लो तहभन्दा सघन छ ।

आन्तरिक तरङ्गहरूले समुद्र र महासागरहरूको गहिराईमा पानीहरूलाई छोपेका हुन्छन् किनभने गहिराईमा भएको पानीको घनत्व माथिल्लो पानीको भन्दा बढी हुन्छ ।

आन्तरिक तरङ्गहरू सतहमाथिका तरङ्गहरू जस्तै हुन्छन् । यी तरङ्गहरू मानव आँखाले देख्न सक्दैन तर कुनै ठाउाको तापमान अथवा नूनिलोपनामा आउने परिवर्तनहरूको अध्ययनबाट तिनको उपस्थिति पत्ता लगाउन सकिन्छ२५ ।

## छ. कुरआनमा बादलहरूको चर्चा

बादलहरूका बिभिन्न प्रकारहरूकोअध्ययनबाट वैज्ञानिकहरूले  के पत्ता लगाएका छन् भने वर्षा ल्याउने बादलहरू एउटा निश्चित प्रक्रियाबाट बनेर बिभिन्न किसिमका रूप धारण गर्छन् ।

वर्षा ल्याउने एक थरिको बादल, Cumulonimbus बादल हो । वायुविज्ञानविद्हरूले Cumulonimbus बादलहरू कसरी बन्छन् र कसरी वर्षा, असिना र वज्रपात गराउाछन् भन्ने कुराहरूको सविस्तार अध्ययन गरेका छन् । यस अध्ययनको आधारमा के पत्ता लागेको छ भने बादलले निम्नलिखित क्रमिक प्रक्रियाहरूबाट वर्षा गराउाछ :

### (१) बादलहरूलाई वायुले धकेलेर पठाउँछ :

वायुले Cumulus बादलका स-साना टुक्राहरूलाई धकेलेर पठाएपछि यी टुक्राहरू एक ठाउामा गएर जम्मा हुन थाल्दछन् । यहाँ उनीहरूले Cumulonimbus बादल बनाउँछन् । (चित्रहरू १७ र १८ हेर्नुहोस् ।

चित्र १७ : भू-उपगह्र द्वारा खिचिएको यस चित्रमा बादलहरू जमाव-क्षेत्रहरू *B, C, D* तिर गतिमान देखिन्छन् । तीरको चिन्हले यस गतिको दिशा देखाउँछ । *("The Use of Satellite Pictures in Weather Analysis and Forecasting: Anderson & Others,* पृ.११८)

चित्र १८ : *Cumulus* बादलका स-साना टुकाहरू जमाव-क्षेत्रतिर गतिमान जहाँ (क्षितिजनिर) पुगेर बिशाल *Cumulonimbus* बादल बनेको देख्न सकिन्छ । *("Clouds & Storms," Ludlam, Plate 7.4)*

(२) **संयोग** :Cumulonimbus बादलका टुक्राहरू एकअर्कासंग जोडिएर बिशाल बादल बनाउँछन्२६ । (चित्र १८ र १९ हेर्नुहोस् ।

चित्र १९ : *(A) Cumulus* बादलका स-साना टुकाहरू

(*B*) जोंडिएर बनेको ठूलो बादल । पानीका थोपाहरू बिन्दु (.) द्वारा दर्शाईएका छन् । (*"The Atmosphere," Amthes & Others,* पृ.२६९)

## (३) थाक जम्मा हुनु (Stacking) :

स-साना बादलहरू एकअर्कासंग जोडिंदा बनेको ठूलो बादलभित्र माथि उक्लिने वायुधाराहरू (Updrafts) बढ्न थाल्छन् । केन्द्रमा भएको वायुधारा छेऊको वायुधारा

भन्दा प्रबल हुन्छ किनभने केन्द्रको वायुधारा चिसिनबाट जोगिएको हुन्छ । यस प्रकार यी वायुधाराहरूले बादलको उँचाई बढाउँछन् । फलस्वरूप बादलको एउटा अग्लो थाक जम्मा हुन जान्छ । (चित्रहरू १९ (ख) २० र २१ हेर्नुहोस् । ऊँचाई बढ्दै जाँदा बादल वायुमण्डलको बढी चिसो भागतिर पुग्दछ जहाँ पानीका थोपाहरू बन्छन् र क्रमशः ठूलो हुँदैजान्छन् । जब यी थोपा निकै ठूलो भइसक्छन् वायुधाराले यिनलाई थाम्न सक्तैनन् र अन्ततः यी वर्षाको रूपमा पृथ्वीमाथि झर्न थाल्छन्[२७] ।

चित्र २० : एउटा *Cumulonimbus* बादल ।
(*"Weather and Climate,"Bodin* पृ.१२३) ।

अल्लाहले कुरआनमा भनेका छन् :

**“के तिमीहरूले देखेका छैनौ कि अल्लाहले कसरी बादलहरूलाई मन्दसाथ गतिमान गराउँछन् अनि तिनीहरूलाई एकअर्कासँग जोड्छन् अनि तिनीहरूको एक थाक बनाउँछन् अनि तिमीहरूले त्यसबाट वर्षा निस्किएको देख्छौ .... ।” (कुरु आन : २४:४३)**

वायु विज्ञानविदहरूले बादल बन्ने प्रक्रिया, त्यसको बनावट र कार्यका यी विवरणहरू हवाई जहाज, उपग्रह र कम्प्यूटर आदि जस्ता यन्त्रहरूको सहायताले वायु-दिशाको अध्ययन, आर्द्रता र त्यसमा आउने परिवतर्न हरूको माप र वायुमण्डलीय चाप र त्यसमा हुने परिवर्तनहरूको मापनद्वारा हालै मात्र पत्ता लगाउन सकेका हुन् ।

कुरआनको उपरोक्त श्लोकमा बादलहरू र वर्षाको वर्णनपछि असिना र बज्रपातको चर्चा गरिएको छ : “...... **र उनी आकाशमा पवर्त हरू (बादलहरू) बाट असिना पठाउँछन् र इच्छानुसार जो सुकैलाई यसले हिर्काउँछन् र ईच्छानुसार जोसुकैदेखि यसलाई (पर) लैजान्छन् । यसको बज्रपातको चहकिलो प्रकाशले आँखालाई प्रायः अन्धो बनाइदिन्छ ।”** (कुरआन : २४:४३)

वायुविज्ञानविदहरूका अनुसार असिना वर्षाउने यी Cumulonimbus बादलहरू पर्वतहरू जस्तै करीब २५००० देखि ३००००फीटसम्मको उचाईमा पुग्छन्२८ जसरी कुरआनमा भनिएको छ, "…. **र उनी आकाशमा पर्वतहरू (बादलहरू) बाट असिना पठाउछँ न्**… ।" (चित्र २१ हेर्नुहोस् ।)

चित्र २१: *Cumulonimbus* बादलको अर्को चित्र *("A Colour Guide to Clouds," Scorer & Wexler,* पृ.२३) ।

यस श्लोकबाट एउटा प्रश्न उठ्न सक्छ । असिनाको संसर्गमा यसको बज्रपात भनेर किन भनिएको हो ? के यसको अर्थ यो हो कि बज्रपात हुनुको मुख्य कारक असिना हो ? यस विषयमा Meteorology Today भन्ने पुस्तकमा के भनिएको छ हेरौं । यसमा भनिएको छ कि बादलको अति शीतल भागबाट असिना झरिसकेपछि बादलहरू विद्युतीय हुन जान्छन् । तरलका थोपाहरू असिनाको सम्पर्कमा आएपछि जम्न थाल्छन् र यसबाट ताप (Latent Heat) निस्किन्छ । यस तापले असिनाको सतहलाई वरिपरिको बरफका टुक्राहरू भन्दा न्यानो बनाइराख्छ । बरफका टुक्राहरू असिनाको सम्पर्कमा आउँदा एउटा महत्वपूर्ण प्रक्रिया शुरू हुन्छ : Electron हरू चिसो पदार्थबाट न्यानो पदार्थ तिर बग्न थाल्छन् जसले असिनामा Negative Charge उत्पन्न गराउँछ । अर्कोतिर बरफका टुक्राहरूमा Positive Charge उत्पन्न हुन्छ । Positve Charge बोकेका यी बरफका टुक्राहरू माथि उक्लिने वायुधारा (Updraft) द्वारा बादलको माथिल्लो भागमा पुऱ्याइन्छन् । अर्कोतिर, Negative Charge बोकेको असिना बादलको तल्लो भागतिर ओर्लिए र त्यसलाई पनि Negative बनाइदिन्छ । यी Negative Charge नै पछि भूईतिर बज्रपातको रूपमा झर्छन्२९ । (चित्र २२ हेनुहोस् ।

यसबाट यो सारंश निस्किन्छ कि बज्रपातको उत्पत्तिमा असिनाको महत्वपूर्ण भूमिका रहेको हुन्छ । बज्रपातको सम्बन्धमा यी खोजहरू हालै मात्र गरिएका हुन् । ई.सं. १६०० सम्म वायु विज्ञानको विषयमा अरिस्टोटलका विचारहरू नै सर्वमान्य थिए । उनले भनेका थिए कि वायुमण्डलमा दुई थरिका बाफहरू छन् आर्द्र र शुष्क । मेघगर्जन भनेको शुष्क बाफको बादलसंग ठक्कर खाादा निस्किने आवाज हो ।

**चित्र २२ : Negetive Charge भूइंतिर बज्रपातको रूपमा झर्दै ।**

र त्यसबाट निस्किने प्रकाश भनेको शुष्क बाफ जलेर बनेको झिनो आगो हो३० । १४०० वर्षअघि कुरआनको अवतरण युगमा वायुविज्ञान विषयमा यस्तै किसिमका विचारहरू मान्य थिए ।

**ज.कुरआनमा उल्लेखित चमत्कारहरूका बारेमा वैज्ञानिकहरूको टिप्पणी :**

कुरआनमा उल्लेखित वैज्ञानिक चमत्कारहरूका बारेमा केहि वैज्ञानिकहरूको टिप्पणी तल दिईदैछ । यी टिप्पणीहरू "THIS IS THE TRUTH" भन्ने भिडियो टेप बाट लिइएका हुन् । यस टेपमा वैज्ञानिकहरूलाई यी टिप्पणी गरिरहेको साक्षात देख्न र सुन्न सकिन्छ । यो टेप पृ. ५०-५१ मा उल्लेखित संस्थाहरूमार्फत प्राप्त गर्न सकिन्छ ।

(१) डा. T.V.N Persaud क्यानडाको मानिटोवा विश्वविद्यालयमा शरीर विज्ञान (Anatomy) विभागका विभागीय प्रमुख तथा बालरोग र शिशु स्वास्थ्यका प्रोफेसर हुन् । आफ्नो क्षेत्रमा उनको ठूलो ख्याति छ । उनी २५ वटा पुस्तकहरूका लेखक अथवा सम्पादक हुन् । उनका १८१ वटा वैज्ञानिक लेखहरू प्रकाशित भइसकेका छन् । क्यानडामा शरीर विज्ञानको क्षेत्रमा दिइने सर्वप्रतिष्ठित पुरस्कार Association of Anatomists को J.C.B. Grant Award १९९१ मा उनलाई नै प्रदान गरिएको थियो । उनले कुरआनका वैज्ञानिक चमत्कारहरूमाथि शोधकार्य पनि गरेका छन् । यस सम्बन्धमा प्रश्न गरिदा उनको उत्तर थियो :

मलाई लाग्छ मुहम्मद (स.) एकजना साधारण व्यक्ति थिए । उनी पढ्न लेख्न जान्दैनथे । हामी आजभन्दा १४०० वर्ष अघिको कुरो गर्दैछौं । एकजना अनपढ व्यक्तिले विद्वत्तापूर्ण घोषणाहरू गरेको र वक्तव्यहरू दिएको पाउँछौं र वैज्ञानिक
प्रकृतिका यी उद्‌गारहरू विस्मयकारी ढंगले शुद्ध र सटीक छन् । यो एउटा संयोग मात्र कसरी होला म बुझ्न सक्तिन । यति धेरै यथार्थता र शुद्धता केवल संयोगको प्रतिफल कदापि हुन सक्तैन । मेरो के विश्वास छ भने यो पक्कै पनि
ईश्वरीय प्रेरणा अथवा प्रदर्शन हुनुपर्छ जसद्वारा मुहम्मद (स.) यी वक्तव्यहरू दिन सफल भए ।

डा. Persaud ले कुरआनका केहि श्लोकहरू तथा मुहम्मद (स.) का केहि उक्तिहरूको उल्लेख आफ्नो केहि पुस्तकहरूमा पनि गर्नुभएको छ । उनले यी श्लोकहरू र उक्तिहरूको चर्चा कतिपय सेमिनारहरूमा पनि गरेका छन् ।

(२) डा. Joe Leigh Simpson संयुक्त राज्य अमेरिकाको Baylor College of Medicine,
Houston, Textas मा Obstetrics & Gynecology (स्त्री रोग र प्रसव विद्या) विभागका अध्यक्ष हुन् । उनी अमेरिकाकै University of Tennessee को Obstetrics & Gynecology विभागको अध्यक्ष र प्रोफेसर पनि रहिसकेका छन् । अहिले उनी American Fertility Society का अध्यक्ष हुन् । १९९२ को Association of Obstetrics & Gynecology Public Recognition Award का साथै अन्य कतिपय पुरस्कारहरू पनि उनलाई प्राप्त भएको छ । डा. Simpson ले मुहम्मद (स.) का निम्न दुई उक्तिहरूको अध्ययन गरे :

“........ तिमीहरू प्रत्येकको संरचनाका अवयवहरू तिम्रो आमाको कोखमा चालीसौं दिन भित्रमा एकत्रित गरिन्छन् ३१.......”

"........ बयालिस रात बितिसकेको भ्रुणमाथि अल्लाहले एउटा फरिश्ता पठाउँछन् जसले उसको स्वरूप निर्धारण गर्छ र उसमा श्रवण, दृष्टि, छाला, मांशपेशि र हाडको रचना गर्छ। अनि उसले प्रश्न गर्छ, हे प्रभु ! यो पुरूष हो कि स्त्री ? र
तिम्रो प्रभुले आफ्नो इच्छानुसार निर्णय गर्छन् ३२......."

डा. Simpson ले यी दुई उक्तिहरूको विस्तृत अध्ययन गरेपछि टिप्पणी गरे कि प्रथम चालीस दिन भ्रुण विकास प्रक्रि याको एउटा स्पष्टसगं छुट्याउन सकिने चरण हो। मुहम्मद (स.) का यी उक्तिहरूको अकाट्य शुद्धता र निश्चयताबाट
डा. Simpson निकै प्रभावित भए। एउटा कन्फ्रेसमा उनले निम्नलिखित विचार व्यक्त गरे :

"उपराक्ते दुई हदीसहरूबाट हामीलाई भ्रुणको प्रथम चालीस दिनको विकासका प्रमुख घटनाक्रमको एउटा निश्चित समय तालिका प्राप्त हुन सक्छ। यी हदीसहरूमा निहित ज्ञान तत्कालीन उपलब्ध वैज्ञानिक सूचनाको आधारमा प्राप्त भएको हुन सक्तैन। मलाई लाग्छ विज्ञान र धर्ममा कुनै विरोधाभास छैन। बरू धर्मले कतिपय परम्परागत वैज्ञानिक विचारहरूमा नयाँ सोच र दर्शनद्वारा विज्ञानको मार्गदर्शन पनि गर्न सक्छ। कुरआनमा व्यक्त उद्‌गारहरूको विज्ञानद्वारा पुष्टि भएबाट के पनि प्रष्ट भएको छ भने कुरआनमा भएको ज्ञान पक्कै पनि ईश्वरद्वारा प्राप्त भएको हुनुपर्छ।"

(३) डा. E. Marshall Johnson संयुक्त राज्य अमेरिकाको फिलाडेल्फियाको Thomas
Jefferson University मा Anatomy & Developmental Biology विभागको प्रोफेसर
तथा सभापति र सोही विश्वविद्यालयको Daniel Baugh Institute का निदर्शेक हुनु हुन्छ। उनका २०० भन्दा बढी प्रकाशनहरू छन्। उनी एकताका Tetralogy Society का अध्यक्ष थिए। १९८१ मा सउदी अरबको दम्मामममा आयोजित सातौं मेडिकल कन्फेन्समा आफ्नो शोधपत्र प्रस्तुतगर्दै डा. Johnson ले भने :"सारांशमा कुरआनले वाह्य स्वरूपको विकासबारे मात्र हैन भ्रुणको भित्रपट्टि
भइराखेको विकास प्रक्रियाबारे पनि जानकारी दिन्छ र यी जानकारीहरू आजको विज्ञानले सत्य भनेर प्रमाणित गरिराखेको छ। ........ एकजना वैज्ञानिकको हैसियतले म केवल ती कुराहरू बारे विचार व्यक्त गर्न सक्छु जुन कुराहरू
किटानका साथ देख्न सक्छु। तर यदि म त्यसबेला (१४०० वर्ष अघि) भएको भए मुहम्मद (स.) ले जे कुराहरू भने ती कुराहरू पक्कै पनि भन्न सक्दिनथें।
मुहम्मद (स.) ले यी जानकारीहरू कुनै विशेष श्रोत बाट पाईराखेको हुनु पर्ने तथ्य नकार्ने कुनै प्रमाण नभएकोले उनको भनाईमा ईश्वरीय दखल थियो भन्ने
कुरा निस्संकोच स्वीकार्न सकिन्छ।"

(४) डा. William W. Hay संयुक्त राज्य अमेरिकाको कोलोराडो विश्वविद्यालयमा Oceanography को प्रोफेसर र एकजना बहु परिचित Marine Scientist हुन् ।हालै मात्र प्रकाशमा आएका सामुद्रिक तथ्यहरूको कुरआनमा भएको उल्लेखको सम्बन्धमा उनको भनाई छ :

"यी जानकारीहरू कुर् आनमा छन् भन्ने कुरा साह्रै चाखलाग्दो हो। यी तथ्यहरू कुरआनमा कहाँबाट आए भन्ने कुरो जान्न मसंग कुनै साधन छैन। मलाई लाग्छ
*यो पक्कै पनि ईश्वरीय हुनु पर्दछ।"*

(५) डा. Gerald C. Goeringer संयुक्त राज्य अमेरिकाको वाशिङ्गटन डि.सि. मा जर्जटाउन वश्वविद्यालयको School of Medicine को Cell Biology विभागमा Medical Embryology को प्रोफेसर र संयोजक हुन् । रियादमा भएको आठौं सउदी मेडिकल कन्फेनसमा आफ्नो शोधपत्र प्रस्तुत गर्दै डा. Goeringer ले भने:

"कुरआनका थोरै श्लोकहरू मै भ्रुण (Embryo) निर्माणदेखि अगंप्रत्यगंको संरचनाका प्रक्रिया तथा चरणहरूका बारेमा बहुव्यापक विवरण दिइएको छ । मानव विकासको यस्तो परिपूर्ण र स्पष्ट अभिलेख जस्तै वर्गीकरण, शब्दवाली र विवरण यसभन्दा अघि भएको भेटिंदैन । यी मध्येका अधिकांश जानकारीहरूको उल्लेख शताब्दियौं पछिको वैज्ञानिक साहित्यमा मात्रै पाउन सकिन्छ ।"

(६) प्रो. Yusudi Kusan जापानको Tokyo Observatory का निरीक्षक हुन् । उनको भनाई छ : "कुरआनमा खगोलविद्या सम्बन्धि यथार्थ तथ्यहरू भएको देखेर म निकै प्रभावित भएको छु । आधुनिक खगोलशास्त्रीहरू ब्रह्माण्डको एउटा अति सानो अंशको मात्र अध्ययन गरिराखेका छन् । किनभने टेलिस्कोपको माध्यमबाट आकाशका केहि भागहरू मात्र देख्न सकिन्छ, सम्पूर्ण ब्रह्माण्ड देख्न सकिंदैन । कुरआनको अध्ययनबाट यस विषयमा अनुत्तरित प्रश्नहरूको जवाफ खोजेर ब्रह्माण्डको अनुसन्धानमा म राम्रो भविष्य देख्दछु ।"

(७) डा. Tejatat Tejasen थाइलडैं को Chiangmai University को Department of Anatomy का वर्तमान सभापति एवम् Faculty of Medicine का भूतपूर्व Dean हुन् । सउदी अरबको रियादमा आयोजित आठौं सउदी मेडिकल कन्फेन्समा उनले घोषणा गरे :

"कुरआनको अध्ययन तथा यस कन्फेन्समा पाएको जानकारीबाट मलाई पूर्ण विश्वास भइसकेको छ कि कुरआनमा जे जति कुराहरू आजभन्दा १४०० वर्ष अघि भनिएका छन् ती सबै पूर्णतया सत्य छन् । यो कुरा आज वैज्ञानिक तथ्यद्वारा प्रमाणित गर्न सकिन्छ । मुहम्मद (स.) अनपढ भएका हुनाले उनी पक्कै पनि विधाताका सन्देशवाहक हुनुपर्छ जसबाट यी जानकारीहरू उनलाई प्राप्त हुन्थ्यो र उनी जनसमक्ष ती जानकारीहरू राख्थे र जुन आज कुरआनको रूपमा हाम्रो सामु रहेको छ । यो विधाता पक्कै पनि ईश्वर अर्थात अल्लाह हुनुपर्छ ।"

पवित्र कुरआनमा वैज्ञानिक चमत्कारका यी उदाहरणहरू र यस ऊपर वैज्ञानिकहरूको टिप्पणी पढीसकेपछि हामी आफैं लाई केंहि प्रश्नहरू सोधौं :

- हालैका वैज्ञानिक अन्वेशणहरू र आजभन्दा १४०० वर्ष अघि अवतरित भएको कुरआनमा यस्तो सामन्जस्यता र एकरूपता को केवल एउटा संयोग हुन सक्छ ?
- के यो कुरआन मुहम्मद (स.) अथवा अरू नै कुनै व्यक्तिद्वारा (आफ्नै ज्ञानको आधारमा) लेखिएको हुन सक्ने सम्भावना छ ?

यी प्रश्नहरूको एउटै उत्तर छ र त्यो हो "होइन, यो कदापि सम्भव छैन र कुरआन पक्कै पनि अल्लाह (ईश्वर) कै शब्दहरू हुनु पर्छ जुन उनले एउटा माध्यमद्वारा अवतरित गरेका हुन् ।"

## (२) कुरआनको चुनौति

### अल्लाहले कुरआनमा भनेका छन् :

**"र यदि तिमीहरूलाई हामीले हाम्रो भक्त (मुहम्मद (स.)) को माध्यमबाट पठाएको (पुस्तक) मा शङ्का लाग्छ भने यसको जस्तो एउटै अध्याय बनाएर देखाऊ र अल्लाहका अतिरिक्त**

**तिम्रा सबै सहयोगीहरूलाई पनि बोलाएर ल्याऊ यदि  तिमीहरू सत्यवादी हौ भने ! र यदि तिमीहरू यस्तो गर्न सक्तै नौं र कदापी सक्तै नौ, भने (नर्कको आगोको भय गर जसको ईन्धन मानिसहरू र ढु·ाहरू हुनेछन् । यो अविश्वासीहरूको लागि तयार पारिएको हो । र (हे मुहम्मद (स.)) ! विश्वासी र सत्कर्मीहरूलाई सु-संवाद सुनाइदेऊ कि उनीहरूका लागि बगैंचाहरू (स्वर्ग छन् जसमा नदीहरू बग्छन् ......... ।" (कुरआन, २, २३-२५)**

१४०० वर्ष अघि कुरआनको अवतरण भएदेखि आजसम्म  कसैले पनि कुरआनको जस्तो सुन्दरता, वाककटुता, वैभव, बुद्धिमत्तापूर्ण विधि निर्माण, सत्य सूचना, सटीक भविष्यवाणी आदि जस्ता गुणहरू भएको एउटै अध्याय पनि रचना गर्न सकेको छैन । विचारणीय छ कि कुरआनको सबभन्दा सानो अध्यायमा केवल १० वटा शब्दहरू छन् र पनि आजसम्म कसैले कुरआनको यस चुनौतिलाई स्वीकार गर्न सकेको छैन । मुहम्मद (स.) का शत्रु केहि अरब अविश्वासीहरूले उनी अल्लाहका पैगम्बर होइनन् भन्ने कुरो प्रमाणित गर्न यो चुनौति स्वीकार्ने प्रयास गरे तर सफल भएनन् । कुरआन उनीहरूकै भाषा र बोली (Dialect) मा भएता पनि, र मुहम्मद (स.) को समयमा अरबहरू अति वाककटुता र सुन्दर कविताहरू लेख्न सिपालु हुँदाहुदै पनि, यो कामचाहिँ कसैले गर्न सकेन ।

चित्र २३ : कुरआनको सबभन्दा सानो (१०८ औं अध्याय जसमा १० वटा शब्दहरू छन् ।

## (३) मुहम्मद (स.) को आगमन सम्बन्धी बाईबलको भविष्यवाणीः

बाईबलमा मुहम्मद (स.) को आगमनको बारेमा उल्लेख गरिएको छ । बाईबलमा विश्वास गर्ने ईसाई धर्मावलम्बीहरूको लागि इस्लामको सत्यताको यो एउटा प्रमाण हो ।

बाईबलको Deuteronomy 18 मा हजरत मूसा (अ.) (Mose) भन्दछन् कि ईश्वरले उनलाई भनः

"म उनीहरूको लागि उनीहरू मध्येबाट तिमीजस्तो एउटा दूत खडा गर्ने छु, म उसको मुखमा आफ्नो बोली राखिदिनेछु र ऊ मैले आदेश गरेको प्रत्येककुरो तिनीहरूलाई बताउने छ । यदि कसैले त्यस दूतले भनेका मेरा शब्दहरू सुनेनन् (मानेनन् भने म स्वयं त्यस व्यक्तिसंग यसको बारेमा हिसाब लिनेछु ।"

(Deuteronomy १८:१८-१९)
यी श्लोकहरूमा आगन्तुक दूतका बारेमा जुन भविष्यवाणी गरिएको छ तिनका निम्नलिखित तीन लक्षणहरू हुनुपर्छ भन्ने निष्कर्ष माथि उल्लेखित बाईबलको अंशबाट निकाल्न सकिन्छ -

१) उनी हजरत मूसा (अ.) (Moses) जस्तै हुनुपर्छ ।
२) उनी इस्राइलीहरूको भाई अर्थात् इस्माईलको वंशजबाट हुनेछन् ।
३) ईश्वर आफ्ना शब्दहरू त्यस दूतको मुखमा हाल्नेछन् र उनी ईश्वरका आदेशहरूको प्रचार गर्नेछन् ।

यी तीन लक्षणहरूको सविस्तार व्याख्या गरौं -
१) हजरत मूसा (अ.) र हजरत मुहम्मद (स.) का बीच जति समानता अन्य कुनै दुई ईशदूतहरू माझ भेट्न सकिंदैन । यी दुवैलाई एउटा विस्तृत र सम्पूर्ण जीवन विधान दिएर पठाइयो । दुवैले शत्रुहरूको सामना गर्दै चमत्कारिक रूपमा सफलताहरू प्राप्त गरे । दुवै नै ईशदूत तथा राज्य सञ्चालकका रूपमा स्वीकार
गरिए । शत्रुहरूको षडयन्त्र तथा हत्याप्रयासबाट बच्न दुवैले आ-आफ्नो देश छाड्नुपरेको थियो । हजरत मूसा (अ.) को जीवनीसाग हजरत ईसा (अ.)(Christ) को तुलना गर्ने हो भने माथि उल्लेखित समानताहरू भेटिंदैनन् ।
यी दुईमा थप निम्न भिन्नताहरू पनि छन् - सामान्य जन्म, पारिवारिक जीवन
तथा प्राकृतिक मृत्यु । हजरत ईसा (अ.) मा यी तीनै कुरा थिएनन् । जबकि हजरत मूसा (अ.) तथा हजरत मुहम्मद (स.) को जीवनमा हामी यी तथ्यहरू भएको पाउछौं । अझ हजरत ईसा (अ.) का अनुयायीहरू उनलाई ईश्वरका दूत
नभइ ईश्वरका सन्तानको रूपमा चिन्छन् जबकि हजरत मूसा (अ.) र हजरत मुहम्मद (स.) आफ्ना अनुयायी माझ ईशदूतका रूपमा परिचित छन् । तसर्थ उपयुर्क्तबाईबलको भविष्यवाणी हजरत मह ु म्मद (स.) को बारेमा गरिएको
मान्नुपर्छ न कि हजरत ईसा (अ.) को बारेमा किनभने हजरत मूसा (अ.) र हजरत मह ु म्मद (स.)मा हजरत ईसा (अ.) भन्दा बढी समानताहरू छन् । अर्को तथ्य पनि मनन गरौं ।
John को Gospel मा वणिर्त छ कि यहूदीहरू तीन
भविष्यवाणीहरू पूरा हुने प्रतीक्षामा थिए : १) ईसा (अ.) को आगमन, २) Elijah को आगमन तथा ३) The Prophet (ईशदूत) को आगमन । Baptist John लाई सोधिएका तीन प्रश्नहरूबाट उक्त कुराको पुष्टि हुन्छ । जेरूसेलमका यहूदीहरूद्वारा पठाइएका पूजारीहरूले John लाई सोधे तिमी को हौ ? उनले स्पष्टसँग स्वीकारे "म Christ होइन" उनीहरूले उनलाई सोधे "उसो भए तिमी को हौ ?" के तिमी Elijah हौ ?" उनले भने "होइन" । फेरि उनीहरूले सोधे "के तिमी त्यो ईशदूत (The Prophet) हौ त ?" उनले उत्तर दिए "होईन" । (John 1:19-21) बाईबलको गहिरिएर अध्ययन गर्दा John 1:21 मा वर्णित The Prophet भन्ने शब्द Denteronomy 18:15 / 18:18 को माथि उल्लेखित भविष्यवाणीसित जोडिएका छन् भन्ने कुरा स्पष्ट हुन जान्छ । यसबाट यो निष्कर्ष निकाल्न सकिन्छ कि Deuteronomy 18:18 मा उल्लेखित Prophet यशू (ईसा अ.) होइनन् ।

## ४) इस्राईलीहरूको भाईहरू मध्येबाट:

इब्राहीम (अ.) का दुई पुत्रहरू थिए- इस्माईल (अ.) र इस्हाक (अ.) (Genesis) ।

इस्माईल (अ.) अरबहरूका तथा इस्हाक (अ.) यहूदीहरूका राष्ट्रपिता बन्न पुगे। माथि उल्लेखित ईशदूत (The Prophet) यहूदीहरूमध्येबाट नभइ तिनका भाईहरूमध्येबाट अर्थात् इस्माईलका सन्तानबाट हुने उल्लेख गरिएको छ। मुहम्मद (स.) जो इस्माईलका सन्तति थिए नै ती दूत (The Prophet) हुन् भन्ने कुरोमा कुनै सन्देह छैन।

पुनश्चः Isaiah 42:1-13 मा ईश्वरका दासको उल्लेख गरिएको छ जो उनीद्वारा "छानिएको" र उनको "दूत" हो र जो एउटा विधान लिएर आउने छ। "विश्वमा शान्ति स्थापित नभएसम्म ऊ निरुत्साहित र आफ्नो कामदेखि विमखु हुनेछैन। उसको विधानमा महाद्वीपहरूले आफ्नो आशा केन्द्रित गर्नेछन्।" (Isaiah 42:4)

एघारौं श्लोकले ती प्रतीक्षित दूत (the messenger) लाई केदारका सन्ततिहरूसित जोडेको छ। केदार को हुन् त ? Genesis को २५:१३ श्लोक अनुसार केदार इस्माईल (अ.) का द्वितीय पुत्र थिए। र इस्माईल हजरत मोहम्मद (स.) का पुर्खा हुन्।

## ५) ईश्वर आफ्ना वचनहरू त्यो दूतको मुखमा हाल्नेछन्।

ईशवाणी (पवित्र कुरआन) वास्तवमै मुहम्मद (स.) को मुखमा हालिएको थियो। ईश्वरले फरिश्ता जिब्रईल (अ.) लाई पठाएर मुहम्मद (स.) लाई आफ्नो वाणी हु- बहू सिकाउन लगाए र सुनीसकेपछि मुहम्मद (स.)ले आफ्ना साथीहरूद्वारा ती शब्दहरू लिपीबद्ध गराए। यसर्थ ती शब्दहरू मुहम्मद (स.) का आफ्नै होइनन्। ती उनका आफ्ना विचारहरूद्वारा सिर्जित होइनन् बरू जिब्राईल (अ.) फरिश्ताद्वारा उनको मुखमा राखिएका हुन्। मुहम्मद (स.) को जीवन मै उनको निगरानीमा ती शब्दहरू उनका साथीहरूद्वारा स्मरण गरिनुको साथ-साथै लिपीबद्ध पनि गरियो।

स्मरण रहोस् Deuteronomy को भविष्यवाणीमा ईश्वरले भनेको छन् - "यदि कुनै व्यक्तिले मेरो दूत का शब्दहरू, जुन मैले नै बोले को हुँ, मानेन भने म आफै ऊसगँ त्यसको हिसाब लिनेछु।" (Deuteronomy 18:19)।

तसर्थ बाईबलमा आस्था राख्ने प्रत्येक व्यक्तिले ईशदूतले भनेका कुराहरूमा विश्वास गर्नै पर्ने देखिन्छ र त्यो ईशदूत भनेको हजरत मुहम्मद (स.) हुन्।

(बाईबलमा मुहम्मद स. का बारेमा थप जानकारीका लागि www.islam-guide.com/mib हेर्नुहोस्।)

(बाईबलका श्लोकहरू The New Internatinal Version बाट लिइएका हुन्।)

## (६) कुरआनका भविष्यवाणीहरू जुन कालान्तरमा सत्य प्रमाणित भए

कुरआनका भविष्यवाणीहरू सत्य भएको एउटा प्रमाण रोमनहरूको पर्सियनहरूमाथि विजय हो। पैगम्बर मुहम्मद (स.) को समयमा रोमनहरूलाई पर्सियनहरूले युद्धमा पराजित गरेका थिए। कुरआनले भविष्यवाणी गऱ्यो कि रोमनहरूले तीनदेखि नौं वर्षभित्रै पसिर्यनहरूलाई पनु : पराजित गर्नेछन्। नभन्दै त्यही भयो। अल्लाहले कुरआनमा भने :

**"निकटवर्ती इलाकामा रोमनहरू पराजित भएका छन् र उनीहरू (यस) पराजय पश्चात, तीनदेखि नौं वर्षभित्रै विजयी हुनेछन्।" -कुरआन, ३० :२-४)**

इतिहासले यी युद्धहरूका बारेमा के भन्छ त ? History of the Byzantine State भन्ने पुस्तकमा लेखिएको छ कि सन् ६१३ मा रोमन सेना Antion भन्ने स्थानमा

नराम्रोसंग पराजित भएको थियो जसको फलस्वरूप पसिर्यनहरू चारैतिरबाट द्रुतगतिले अगाडि बढे३३ । यस्तो परिस्थितिमा रोमनहरूले पर्सियनहरूलाई फेरि पराजित गर्न सक्लान् भनेर कल्पना पनि गर्न सकिदैन थियो । तर कुरआनले घोषणा गऱ्यो कि रोमनहरू तीनदेखि नौं वर्षभित्रमै पुन : विजयी हुनेछन् ।

सन् ६२२ मा, रोमनहरूको उपयुक्त पराजयको नौं वर्षपछि यी दुई सेनाहरू (रोमन र पर्सियन) बीच आर्मिनियामा पुनः भिडन्त भयो । परिणाम भयो रोमनहरूको निर्णायक विजय । सन् ६१३ को पराजयपछि रोमनहरूको यो प्रथम विजय थियो३४ ।

कुरआनमा अल्लाहले जे घोषणा गरेका थिए अक्षरशः त्यही भयो । यसका अतिरिक्त पनि कुरआनका कतिपय श्लोकहरू एवं मुहम्मद (स.) का कतिपय भनाईहरू
यस्ता छन् जसमा गरिएका भविष्यवाणीहरू कालान्तरमा सत्य प्रमाणित भएर आए ।

## (७) मुहम्मद (स.) द्वारा प्रदर्शित चमत्कारहरू

अल्लाहको आज्ञाले मुहम्मद (स.) ले धेरै चमत्कारहरूको प्रदर्शन गरे । यी चमत्कारहरूका साक्षी धेरै व्यक्तिहरू थिए । उदाहरणस्वरूप :

– मक्काका अविश्वासीहरूले चमत्कार देखाउने मांग गरेपछि मुहम्मद (स.) ले चन्द्र दुई टुक्रा भएको देखाइदिए३५ ।

– अर्को चमत्कार थियो पैगम्बर मुहम्मद (स.) को औंलाबाट पानीको प्रवाह जबकि उनका साथीहरू तिर्खाएको बेला भाँडोमा अलिकति मात्र पानी थियो । साथीहरूले आएर गुनासो पोखे, “भाँडोमा भएको थोरै पानीले वजू गर्न (नमाज पढ्नुअघि हात मुख धुने क्रिया) र खान कत्ति पनि पुग्दैन ।” पैगम्बर मुहम्मद (स.) ले आफ्नो हात त्यस भाँडोमा हाले । उनको औंलाहरूको माझबाट पानी हुत्तिएर बग्न थाल्यो । यो पानी उनीहरूले खाए पनि र यसले वजू पनि गरे । त्यहाँ साथीहरूको संख्या १५०० थियो३६ ।

यसका अतिरिक्त पनि मुहम्मद (स.) द्वारा प्रदर्शित थुप्रै चमत्कारहरू छन् ।

## (८) मुहम्मद (स.) को सरल जीवन

सन्देष्टाको दायित्व पाउनुभन्दा अघि र पछिको मुहम्मद (स.) को जीवनको तुलना गर्दा यो कुरा प्रष्ट भएर आउँछ कि उनी वास्तवमै अल्लाहका पैगम्बर सन्देष्टा थिए । उनी नक्कली पैगम्बर थिए र तात्विक लाभ, महानता, मान-सम्मान र शक्ति आर्जन गर्नको लागि सन्देष्टाको नाटक गरेका थिए भन्ने धारणा पूर्णतया निराधार र कपोलकल्पित प्रमाणित भएर जान्छ ।

सन्देष्टाको दायित्व पाउनुभन्दा अघि मुहम्मद (स.) को सामु कुनै आर्थिक कठिनाई थिएन । सफल र सम्मानित व्यापारी भएका हुनाले आम्दानी प्रशस्तै थियो । सन्देष्टाको दायित्व पाएपछि र यसै दायित्वको कारणले उनी आर्थिक रूपले विपन्न हुन थाले । यसलाई अझ स्पष्ट पार्न उनको जीवनमाथि गरिएका निम्न टिप्पणीहरूको विश्लेषण गरौं :

– मुहम्मद (स.) की पत्नी आईशा (र.) भन्छिन्, “हे मेरा भतिज ! मुहम्मद (स.) को घरमा दुई-दुई दिनसम्म चूल्हो जल्दैनथियो (खाना पाक्दैनथियो ।”

उनको भतिजले सोधे, “उसो भए तपाईहरू के गरी बाच्नु हुन्थ्यो ?” उनले उत्तर दिईन्, “खजूर र पानी खाएर । यसका अतिरिक्त मुहम्मद (स.) का केहि सहयोगीहरू आ-आफ्नो ऊँटको दूध कहिलेकाहिँ हाम्रो घरमा पठाई दिने गर्दथे३७ ।”

– मुहम्मद (स.) का एकजना मित्र, सहल बिन साद, भन्छन्, “सन्देष्टाको दायित्व पाएपछि मृत्युसम्म मुहम्मद (स.) ले राम्रो पिठोको रोटी कहिले खान पाउनु भएन३८ ।”

– मुहम्मद (स.) की पत्नी आईशा (र.) भन्छिन्, “मुहम्मद (स.) को सुत्ने ओछ्यान छालाको हुन्थ्यो जसभित्र खजूरको रेशा भरिएको हुन्थ्यो ३९ ।”
– अम्र बिन अल-हारिस, मुहम्मद (स.) का एकजना सहयोगी भन्नु हुन्छ कि
“मृत्युको बेला मुहम्मद (स.) को धन-सम्पत्ति केहि थिएन । थियो त खाली एउटा सवारीको सेतो घोडा, लडाईका केहि हतियारहरू र जमीनको एउटा सानो टुक्रा जुन कि दान गरिदिसकेका थिए ४० ।”
पैगम्बर मुहम्मद (स.) ले सारा जीवन यस्तै कठिन अवस्थामा बिताए जबकि इस्लामी ढुकुटी उनकै अधीनमा थियो, मृत्यु अगावै प्राय: सम्पूर्ण अरब उपद्वीप इस्लामको झण्डामुनि आइसकेको थियो र मुस्लिमहरू चारैतिर विजयको पताका फहराइसकेका थिए ।
के यो कुरा सम्भव छ कि मुहम्मद (स.) ले सन्देष्टाको दावी मानसम्मान, धनसम्पत्ति र शक्तिका लागि गरेका होऊन् ? मानसम्मान र शक्तिको इच्छा भनेको मीठो चोखो खाने कुरा, दामी लुगाफाटा, विशाल महलहरू, रङ्गबिरङ्गी रक्षक सैनिकहरू र निर्विवाद शासनाधिकारसँग सम्बन्धित हुन्छ । के यी मध्ये कुनै पनि कुराको चाहना मुहम्मद (स.) को जीवनमा भएको पाइन्छ ? तल दिइएको उनको जीवनको केही झांकीहरूबाट यस प्रश्नको उत्तर पाउन सकिन्छ :
एउटा पैगम्बर, शिक्षक, राज्य परिचालक र न्यायधिश आदिको दायित्व पालन गरेर पनि मुहम्मद (स.) आफ्नो बाखीको दूध आफै दुहुन्थे४१ आफ्ना लुगा फाटाहरूको मर्मत आफै गर्दथे४२ घरका कामकाजमा सघााउथे४३ र गरीब व्यक्तिहरू बिरामी पर्दा उनीहरूको खोजखबर लिन आफै जान्थे४४ । उनले एक पटक आफ्ना साथीहरूलाई खाल्टो खन्ने बेलामा माटो र बालुवा ओसारेर पनि मद्दत गरेका हुन्४५ । उनको जीवन सरलता र नम्रताको चमत्कारी नमुना थियो ।
मुहम्मद (स.) का अनुयायीहरू उनलाई निकै माया गर्दथे, उनको सम्मान गर्दथे र उनीमाथि गजबको आस्था र विश्वास राख्दथे । तर मुहम्मद (स.) जहिले पनि के कुरामा जोड दिन्थे भने “इबादत” (भक्ति) अल्लाहको मात्र हुनु पर्दछ नकि  स्वयम् उनको । मुहम्मद (स.) का एकजना साथी अनस (र.) भन्छन्, “हामी मुहम्मद (स.) लाई जतिको अरू कसलै ई माया र सम्मान गर्दैनथ्यौं तै पनि मुहम्मद (स.) को -हाम्रो सभामा) आगमन हुदाँ हामी उनको लागि कहिलै पनि उभिदैनथ्यौं किनभने मुहम्मद (स.) लाई त्यस्तो सम्मान-प्रदर्शनबाट घृणा थियो जस्तो अन्य व्यक्तिहरूले आफ्ना ठूला बडाको सम्मानमा उभिएर गर्ने गदर्थे४६ ।”
मुहम्मद (स.) र उनका साथीहरूमाथि भयङ्कर अत्याचार, भिषण यातना र असहनिय यन्त्रणा चलिराखेको बेला जबकि इस्लामको सफलताको कुनै लक्षण थिएन,मुहम्मद (स.) लाई एउटा चाखलाग्दो प्रस्ताव गरियो । अधर्मीहरूका नेता र दूत, उतबाले आएर मुहम्मद (स.) लाई भने, “......... यदि तिमीलाई सम्पत्ति चाहिन्छ भने भन, हामी यति धन जम्मा गरेर तिमीलाई दिन्छौं कि तिमी अरबको सबभन्दा धनी व्यक्ति भइहाल्ने छौ । यदि तिमी हाम्रो नेता बन्न चाहन्छौ भने हामी सबै तिम्रो नेतृत्व मान्न तयार छौं र तिम्रो सहमति बिना कुनै निणर्य हुने वाला छैन । हैन , यदि तिमीलाई राजत्व चाहिन्छ भने हामी सबै तिमीलाई आफ्नो राजा मान्न पनि तयार छौ ..........।”
यी सबको बदलामा मुहम्मद (स.) सँग एउटै माग गरिएको थियो – “तिमी मानिसहरूलाई इस्लामतिर निम्त्याउने र अल्लाहका अतिरिक्त अरू कसैको भक्ति र पूजा नगर्ने भन्ने तिम्रो आह्वान छाडिदेऊ ।”
सांसारिक लाभको लागि काम गर्ने ब्यक्तिको लागि यो प्रस्ताव लोभलाग्दो थिएन ? यो प्रस्ताव पाऊँदा के मुहम्मद (स.) दोधारमा पर्न गए ? के उनले यसभन्दा पनि राम्रो प्रस्ताव पाउनको लागि आइन्दा वार्ताको सम्भावना खुल्ला राख्दै मोलतोलको

नीति अपनाए ? उनको जबाफ हेर्नुहोस् -"अल्लाहको नामबाट जो कृपाशील र दयालु छन् ।" त्यसपछि उनले उतबालाई कुरआनको एकचालीसौं अध्यायको एकदेखि अठ्चालीससम्मका श्लोकहरू पढेर सुनाए४७। ती मध्ये केहि श्लोकरूको अर्थ यो हो:
"अति कृपाशिल र दयालु (अल्लाह) का तर्फबाट अवतरित एउटा किताब जसमा श्लोकहरूको सविस्तार व्याख्या गरिएको छ;; एउटा कुरआन जुन अरबी (भाषा) मा छ;; बुद्धिमान व्यक्तिहरूको लागि;; सुसवांद र चेतावनी दिने; तैप नि आधिकाशं व्यक्तिहरू फकर्रे जान्छन् ताकि सुन्न नपरोस् ।" (कुरआन, ४१: २-४)
अर्को अवसरमा आफ्नो काकाको यस अनुरोधको प्रतिक्रियामा कि तिमी मानिसहरूलाई इस्लामतिर डाक्ने काम बन्द गरिदेऊ, मुहम्मद (स.) को उत्तर निर्णायक र सुस्पष्ट थियो : "अल्लाहको सौगन्ध छ काका ! म यस (मानिसहरूलाइ इस्लामतिर डाक्ने कामर्देखि कहिले विमुख हुने छैन चाहे तिनीहरूले मेरो एक हातमा सूर्य र अर्को हातमा चन्द्र नै ल्याएर किन नराखिदेऊन् । अल्लाहले यस काममा पूर्ण सफलता नदिएसम्म म यो काम जारी राख्ने छु चाहे यस काममा मेरो नाश नै किन नहोस्४८।"
मुहम्मद (स.) र उनका अनुयायीहरूले १३ वर्षसम्म भयङ्कर यातना मात्र सहनु परने , बरू अविश्वासीहरूले कैयौं पटक उनलाई मार्ने षडयन्त्र समेत गरे । एकचोटी एउटा अति गह्रौं ढुङ्गाले हानेर टाउको फुटाइदिने प्रयत्न भयो४९ । अर्को पटक खानामा विष दिएर मार्ने उद्योग गरियो५० ।
के यी लक्षणहरू शक्तिको भोको र स्वार्थी व्यक्तिका हुन सक्छन् ? आफ्ना शत्रुहरूमाथि पूर्ण विजय प्राप्त गरिसकेपछि पनि यस्तो कष्टपूर्ण र बलिदानयुक्त जीवनको औचित्य के हुन सक्छ ? सम्पूर्ण विजय प्राप्तिपछिको गौरवमय क्षणमा पनि अति नम्र भएर व्यक्त गरिएको उनको उद्गार "यो विजय अल्लाहको सहायताले प्राप्त भएको हो, मेरो कुश लताले हैन " को व्याख्या कसरी गर्ने ?

## (९) इस्लामको आश्चर्यजनक विस्तार

यस अध्यायको अन्तमा इस्लामको सत्यताको एउटा महत्वपूर्ण प्रमाण आर्ल्याउन उचित नै होला । यो एउटा सर्वविदित तथ्य हो कि अमेरिकामा सबभन्दा तीब्र गतिले फैलिरहेको धर्म इस्लाम हो । यस प्रक्रियाका सम्बन्धमा केहि टिप्पणीहरू विचारणीय छन्-
– "इस्लाम अमेरिकामा सबभन्दा तीब्रगतिले फैलिराखेको धर्म हो । यो धर्म हाम्रा थुप्रै मानिसहरूको लागि मार्गदर्शक र आस्था-स्तम्भ प्रमाणित भएको छ.........।"
("Hillary Rodham Clinton", Los Angeles Times)५१
– "मुसलमानहरू संसारको सबभन्दा तीब्र गतिले बढीराखेको समूह हो.......।"
(The Population Reference Bureau, USA Today)५२
– "इस्लाम मुलुकको सबभन्दा तीब्रगतिले बढिराखेको धर्म हो ।" ("Geraldine Baum," Newsday)५३
– "इस्लाम संयुक्त राज्य अमेरिकाको सबभन्दा तीब्रगतिले बढीराखेको धर्म हो ।"
("Ari L Goldman," New York Times)५४
यस प्रक्रियाले के दर्शाउादछ भने इस्लाम वास्तवमै अल्लाहद्वारा अवतरित साँचो धर्म हो । यत्तिका व्यक्तिहरू राम्ररी विचार र चिन्तन नगरिकनै इस्लामलाई अङ्गीकार गरे होलान् भन्ने कुरा सोच्नु युक्तिसंगत देखिँदैन । यी अमेरिकीहरू भिन्दाभिन्दै वर्ग, जाति तथा पेशाहरूसंग सम्बन्धित छन् । यिनीहरूमध्ये वैज्ञानिक, प्रोफेसर, दार्शनिक तथा पत्रकारहरू रहेका छन् ।

यस अध्यायमा उल्लेखित तथ्यहरू कुरआनलाई अल्लाहको वाणी, मुहम्मद (स.) लाई अल्लाहको सच्चा पैगम्बर र इस्लामलाई अल्लाहको सच्चा धर्म भनेर प्रमाणित गर्ने अनेकौं प्रमाणहरूमध्येका केहि बुदाँहरूमात्र हुन् ।

## सन्दर्भ सामग्रीहरू


१. दुई कोष्ठ"......" को बीचमा जे लेखिएको छ त्यो कुरआनको अर्थको अनुवाद मात्र हो, कुरआन नै चाही होईन किनभने कुरआन त अरबी भाषामा छ ।
२. "The Deveoloping Human," Moore and Persaud, 5th ed., पृ.सं. ८
३ र ४ "Human Development as Described in the Quran and Sunnah," Moore and Others, पृ.सं. ३६ र पृ.सं. ३८
५ र ६ The Deveoloping Human, Moore and Persand, 5th ed., पृ.सं. ६५ र पृ.सं. ८
७. "This is the Truth" (भिडियो टेप) । यो टेप पृष्ठ ४५-४६ मा उल्लेखित संस्थाहरूबाट प्राप्त गर्न सकिन्छ ।
८. "Earth," Press and Siever, पृ.सं.४३५ र 'Eearth Science," Tarbuck and Lutgens, पृ.सं. १५७
९-१२ "The Geological Concept of Mountains in the Quran", EL-Naggar, पृ.सं. ५, ४४-५५
१३. "The First Three Minutes, a Modern View of the Origin of the Universe", Weinberg पृ.सं. ९४-१०५
१४र१५ "This is the Truth" (भिडियो टेप)
१६र १७ "Essentials of Anatomy & Physiology", Seeley and Others, पृ.सं. २११
तथा "The Human Nervous System", Noback and Others पृ.सं. ४१०-४११, २११
१८. "The Scientific Miracles in the Front of the Head", Moore & Others पृ.सं. ४१
१९र२० "Principles of Oceanography", Davis पृ.सं. ९२-९३
२१र२२ "Oceanography", Gross पृ.सं. २४२, २४४ र "Introductory Oceonography",Thruman पृ.सं. ३००-३०३
२३. "Oceans", Elder and Pernettar, पृ.सं. २७
२४र२५ "Oceonography", Gross, पृ.सं. २०५
२६र२७ "The Atmosphere" Anthes & Others पृ. २६८-२६९, र Elements of Meteorology Miller & Thompson, पृ. १४१-१४२
२८. "Elements of Meteorology, "Miller & Thompson, पृ.सं. १४१
२९. "Meterology Today," Ahrens, पृ. ४३७

३०. “The Works of Aristotle” Translated into English : Meteorologica, Vol. 3,
Ross & Others पृ.३६९a (३६९b
३१. “सही मुस्लिम” नामक हदीस को पुस्तकबाट उद्धृत हदीस न. २६४३ । हदीस भनेको पैगम्बर मुहम्मद (स.) का प्रमाणित उक्ति, कार्य र सहमतिहरू हुन् जुनकि अति विश्वसनीय उनका साथीहरूको माध्यमबाट प्राप्त भएका हुन् ।
३२. “सही मुस्लिम” नं. २६४५
३३. "History of Byzantine State," Ostrogorsky पृ.९५
३४. ऐ. पृ. १००-१०१, र "History of Persia," Sykes, Vol. 1, पृ. ४८३-४८४ तथा "The New Encylopedia Britannica Micropedia" Vol. 4, पृ.१०३६
३५. “सही बुखारी” नं. ३६३७, र “सही मुस्लिम” नं. २८०२
३६. “सही बुखारी” नं. ३५७६, र “सही मुस्लिम” नं. १८५६
३७. “सही मुस्लिम” नं. २९७२, र “सही बुखारी” नं. २५६७
३८. “सही बुखारी” नं. ५४१३ र “तिर्मिजी” नं. २३६४
३९. “सही मुस्लिम” नं. २०८२, र “सही बुखारी” नं. ६४५६
४०. “सही बुखारी” नं. २७३९ र “मुसनद अहमद” नं. १७९९०
४१. “मुसनद अहमद” नं. २५६६२
४२र४३ “सही बुखारी” नं. ६७६, र “मुसनद अहमद” नं. २५५१७, २३७०६
४४. “मुअत्ता मालिक” नं. ५३१
४५. “सही बुखारी” नं. ३०३४, “सही मुस्लिम” नं. १८०३, “मुसनद अहमद” नं. १८०१७
४६. “मुसनद अहमद”, नं. १२११७ र “तिर्मिजी” नं. २७५४
४७-४९ “सीरत अन-नबवीया,” इब्ने हेशाम, ख्यी ज्ञ, पृ. २९३-२९४, २६५-२६६, २९८-२९९
५० “अल-दारमी”, नं. ६८, र “अबु दाऊद”, नं. ४५१०
५१. "First Lady Breaks Ground With Muslims" Los Angeles Times, Home
Edition, May 31 1996, पृ.३
५२. "Elsewhere in the World," USA Today, Feb.17, 1989, पृ.सं. ४ A
५३. "For Love of Allah," Newsday, Part 2, March 7, 1989, पृ.सं. ४
५४. Ari L. Goldman, "Mainstream Islam Rapidly Embraced by Black
Americans," New York Times, Feb. 21, 1989, पृ. सं. १

# अध्याय-२

## इस्लामका केहि फाईदाहरू

इस्लामबाट व्यक्ति तथा समाजलाई अनेकौं फाईदाहरू छन् । यस अध्यायमा व्यक्तिलाई हुने केहि फाईदाहरूको उल्लेख गरिएको छ ।

## (१) अनन्त स्वर्गको प्राप्ति

अल्लाहले कुरआनमा भनेका छन् :

**"हे मुहम्मद ! विश्वास गर्नेहरू र सत्कर्म गर्नेहरूलाई शुभ समाचार सुनाई देऊ । उनीहरूले बगैंचा (स्वर्ग पाउनेछन् जसमा नदीहरू बग्दछन्........।"** (कुरआन, २:२५)

अल्लहले यो पनि भनेका छन् :

**"एकअर्कासंग प्रतिस्पर्धा गर अल्लाहको क्षमादान पाउन र स्वर्गप्राप्तिको लागि जसको चौडाई पृथ्वी र आकाशको चौडाई जत्तिको छ, जुन तयार पारिएको हो अल्लाहमा र उनको पैगम्बरमा आस्था राख्नेहरूका लागि.....।"** (कुरआन, ५७:२१)

पैगम्बर मुहम्मद (स.) ले भनेका छन् कि "स्वर्गको सबभन्दा निम्न श्रेणीको बासिन्दाले पनि यस संसारको (ऐश्वर्य भन्दा दश गुणा बढी पाउने छ १ ।
र उसले जे इच्छा गऱ्यो त्यही पाउने छ र त्यसभन्दा दश गुणा बढी पाउने छ २ ।"
मुहम्मद (स.) ले यो पनि भनेका छन् : "स्वर्गको एउटा पैताला बराबरको स्थान पनि यो संसार र यस भित्रका वस्तुहरू भन्दा राम्रो छ"३ । उनले यो पनि भनेका छन् : "स्वर्गमा यस्ता वस्तुहरू छन् जुन कुनै आँखाले देखेको छैन, कुनै कानले सुनेको छैन र कुनै मानव बुद्धिले कल्पना गर्न सकेको छैन"४ । उनको एउटा यस्तो उक्ति पनि छ : "यस संसारको सबभन्दा दुःखी र कष्टभोगी व्यक्तिलाई एकपटक स्वर्गमा डुबाई उसलाई सोधिनेछ, हे आदमको सन्तान तिमीले कहिल्यै कुनै दुःख पाएका छौ ? तिमीलाई कहिल्यै कुनै कष्ट भएको छ ? उसको उत्तर हुनेछ, छैन, अल्लाहको सौगन्ध मैले आजसम्म कुनै दुःख पाएको छैन, र मैले कुनै कष्टको अनुभव आजसम्म गरेको छैन ५ ।"
यदि तपाईंले स्वर्गमा पस्न पाउनुभ यो भने तपाईको जीवन अति आनन्दमय हुने छ , कुनै रोग अथवा मृत्युको सामना गर्नु पर्ने छैन र जीवन अनन्त हुनेछ । अल्लाहले कुरआनमा भनेका छन् :

**"र जसले विश्वास गर्छन् र सत्कर्महरू गर्छन् उनीहरूलाई हामी बगैंचाहरूमा प्रवेश गराउने छौं जसमा नदीहरू बग्दछन्: त्यहाँ सधैं भरि रहनको लागि....।"** ( कुरआन, ४:५७)

## (२) नर्कको आगोदेखि मुक्ति

कुरआनमा उल्लेखित छ :

**"जसले अविश्वास गरे र अविश्वास कै अवस्थामा मृत्युवरण गरे, उनीहरूमध्ये कसैको तर्फबाट मोक्ष-प्राप्तिको लागि सम्पुर्ण संसार बराबरको सुन टक्र्याइए पनि स्वीकार गरिने छैन । उनीहरूले कष्टदायी सजाय पाउने छन् र नीहरूलाई मद्दत गर्ने कोहि हुने छैन ।"** ( कुरआन, ३:९१)

तसर्थ स्वर्ग प्राप्त गर्ने र नर्कको आगोदेखि बच्ने एकमात्र मौका हाम्रो यही जीवन हो किनभने अविश्वासको अवस्थामा कोही मऱ्यो भने यस संसारमा फर्केर आउन र विश्वासी

बन्न अर्को मौका उसले पाउने छैन । तसर्थ कुरआनमा अल्लाहले अविश्वासीहरूको फैसलाको दिनमा हुने दुरावस्थाको वर्णन गर्दै भनेका छन् :

**"तिमीहरूले उनीहरूको अवस्था देख्न सके" जब नर्कको सामु ल्याइएपछि उनीहरू भन्नेछन् हामी संसारतिर फर्किन पाए "अनि हामी हाम्रो पभ्रुका श्लोकहरू अस्वीकार गर्ने छैनौं बरू हामी विश्वासीहरू मध्ये हुने छौं ।"** (कुर आन, ६:२७)

तर यो दोस्रो मौका कसैले पाउने छैन ।

पैगम्बर मुहम्मद (स.) ले भनेका छन् :

"नर्कमा पुग्ने सबभन्दा सुखी व्यक्तिलाई एकपटक नर्कको आगोमा डुबाइने छ । अनि उसलाई सोधिने छ, हे आदमको सन्तान ! तिमीले कुनै सुख भोगेका छौ ? तिमीले कुनै राम्रो वस्तु देखेका छौ ? उसको उत्तर हुनेछ, अल्लाहको कसम छैन, मेरो प्रभु६ ।"

## (३) वास्तविक आनन्द र आन्तरिक शान्ति

वास्तविक आनन्द र शान्ति यस संसारका रचयता र पालनहारका सामु नतमस्तक भएर र उनको आज्ञापालन गरेर मात्र पाउन सकिन्छ ।

**"साँच्चै, अल्लाहको सम्भनामा मुटुहरूले आराम पाउँछन्"।** (कुरआन, १३:२८)

अर्कोतिर जो कुरआन देखि टाढा भाग्न खोज्छ उसले यस संसारमा कष्टपद्रजीवन पाउने छ । अल्लाहले भनेका छन् :

**"तर जो कोहि कुरआनदेखि टाढिन खोज्छ७ उसले कष्टपूर्ण जीवन पाउने छ । फैसलाको दिनमा हामी उसलाई अन्धो उठाउनेछौं ।"** -कुर आन, २०:१२४)

कोहि कोहि धन-सम्पत्ति र सांसारिक ऐश-आराम पाएर पनि किन आत्महत्या गर्दा रहेछन् भन्ने कुरा यस उक्तिबाट केहि हदसम्म बुभ्न सकिन्छ । उदाहरणार्थ, Cat Stevens, (युसुफ इस्लाम) लाई हेरौं । उनी एकताका विश्व पसिद्ध पप सिङ्गर थिए र एकरातको उनको आय १,५०,००० डलरसम्म हुन्थ्यो । इस्लाम धर्म ग्रहण गरेपछि त्यो आनन्द र शान्तिको अनुभव उनले गरे जुन भौतिक सफलताले अहिलेसम्म पुऱ्याउन सकेको थिएन८ ।

## (४) पूर्वका सबै पापहरूको क्षमादान

कुनै पनि व्यक्ति जब इस्लाम धर्म ग्रहण गर्छ, ईश्वर उसको पुराना सबै पाप तथा दुष्कर्महरू क्षमा गरिदिन्छन् । अम्र नामको एकजना व्यक्तिले आएर मुहम्मद (स.) लाई भने - "मलाई तपाईंको हात दिनुहोस् ताकि म शपथ खाएर तपाई प्रति आफ्नो वफादारिता प्रदर्शन गरूँ ।'' ईशदुत (स.) ले आफ्नो दायाँ हात उनलाई दिए । अम्रले आफ्नो हात तान्यो । ईशदूतले सोध्नुभयो "अम्र ! के भयो ?'' अम्रले भने "एउटा शर्त राख्न चाहन्छु ।'' ईशदूतले सोधे "तिम्रो शर्त के हो ?'' अम्रले उत्तर दिए "ईश्वरले मेरा सबै पापहरू क्षमा गर्नुपर्छ ।'' ईशदूत ले भने "तिमीले सुनेको छैनौं कि जो कोहि इस्लाम धर्म ग्रहण गर्छ अल्लाहले उसका पूर्वका सबै पापहरू मेटाइदिन्छन् ।''

ईस्लाम धर्म अङ्गालिसकेपछिका सत्कर्म तथा दुष्कार्यहरूको आधारमा त्यस व्यक्तिको मूल्याङ्कन हुनेछ । अल्लाहका रसूल हजरत मुहम्मद (स.) ले भने - "तिमीहरूका पभ्रु अति

दयावान छन् । यदि कुनै व्यक्तिले सत्कर्म गर्ने निश्चय गऱ्यो भने त्यो गर्न नसके पनि ( संकल्प गरेकै कारणले त्यसको पुण्य उसलाई मिल्नेछ । यदि ऊ सो सत्कर्म गर्न सफल भयो भने त्यसको दशदेखि सात सय गुणा अथवा त्यो भन्दा पनि कैयौं गुणा बढी पुण्य उसको खातामा लेखिने छ । कुनै व्यक्तिले दुष्कर्म गर्ने निश्चय गऱ्यो तर त्यो कार्य गरेन भने ( दुष्कर्मबाट रोकिए वापत) एउटा पुण्य उसको खातामा लेखिनेछ । यदि सो दुष्कर्म गरि नै हाल्यो भने ऊ केवल एउटा पापको भागी हुनेछ, अथवा अल्लाहले त्यसलाई पनि मेटिदिन सक्नेछन् ।"

## सन्दर्भ सामग्रीहरू

१. "सही मुस्लिम", नं. १८६, र "सही बुखारी," नं. ६५७१
२. "सही मुस्लिम", नं. १८८ र "मुस्नद अहमद" नं. १०८३२
३. "सही बुखारी", नं. ६५६८ र "मुस्नद अहमद" नं. १३३६८
४. "सही मुस्लिम", नं. २८२५, र "मुसनद अहमद" नं. ८६०९
५.र ६ "सही मुस्लिम", नं. २८०७ र "मुस्नद अहमद" नं. १२६९९
७. न कुरआनमाथि विश्वास गर्छ न यसमा दिइएका आज्ञाहरूको पालन गर्छ ।
८. युसुफ इस्लामको हालको ठेगाना : 2 Digswell Street, London N7 8JX, United Kingdom.

## अध्याय-३

इस्लामसम्बधी सामान्य जानकारीहरू

**(१) इस्लाम के हो ?**

इस्लाम धर्म पैगम्बर मुहम्मद (स.) को माध्यमबाट पठाइएको अल्लाह (ईश्वर) का शिक्षाहरू पूर्ण रूपले स्वीकार गर्नु र तिनको आज्ञापालन गर्नु हो । इस्लामको अर्को अर्थ शान्ति पनि हुन्छ ।

## (२) इस्लामका मूलभूत आस्थाहरू

## क. अल्लाह (ईश्वर) माथि आस्था

मुसलमानहरू एकमात्र, अद्वितीय, अतुलनीय, ईश्वर (अल्लाह) माथि विश्वास राख्दछन् जसको न कुनै सन्तान छ न पति वा पत्नि र यस अल्लाहका अतिरिक्त भक्ति (उपासना) पाउने अधिकार अरू कसैको छैन । उनका नामहरू सवार्त्ते म र गुणहरू सम्पूर्ण र सर्वोत्कृष्ट छन् । कुरआनमा अल्लाहले आफू लाई वणर्न गर्दछन् :

**"भन, ऊ अल्लाह हो, एक्लो अल्लाह जोतिर सृष्टि आफ्नो आवश्यकताको लागि फर्किन्छ । न उसको कुनै सन्तान छ न ऊ कसैको सन्तान हो र ऊ जस्तो अरू कोहि छैन ।"** (कुरआन, ११२:१-४)

यस ब्रहृमाण्ड र ब्रहृमाण्डमा जे जति छ ती सबैको रचयता र पालनकर्ता एकमात्र, सर्वसत्ताधिकारी, महान अल्लाह (ईश्वर) नै हुन् । उनी नै सब कुरोका व्यवस्थापक हुन् । उनले जे जति सृष्टि गरेका छन् ती मध्ये उनलाई कसैको आवश्यकता छैन जबकि सृष्टिको प्रत्येक इकाई आ-आफ्नो आवश्यकताको लागि उनैमाथि निर्भर छ । उनी सर्व-श्रवण, सर्व-दृष्टि र सर्व-ज्ञानका मालिक हुन् । उनको ज्ञान सर्वव्यापी छ । खुला र रहस्य, सार्वजनिक र व्यक्तिगत सबै कुरा उनलाई थाहा छ । उनको इच्छा र स्वीकृति विना यस संसारमा कुनै काम वा घटना हुँदैन । उनले जे इच्छा गर्छन त्यही हुन्छ, जे इच्छा गर्दैनन् त्यो हुँदैन र कहिल्यै हुन सक्तैन । उनको इच्छा, सृष्टिमा जे छ ती सबैको इच्छाहरूमाथि छ । सबै कुरामाथि उनको अधिकार छ र उनी जे पनि गर्न सक्छन् । उनी सबभन्दा दयालु, सबभन्दा कृपाशील सबभन्दा परोपकारी छन् । पैगम्बर मुहम्मद (स.) को भनाई छ, "ईश्वर (अल्लाह) हामीमाथि हाम्रा आमाहरू भन्दा पनि बढी दयावान छन्"१ । अल्लाह अन्यायी र अत्याचारी होईनन् । उनले जे गर्छन र जुन कुरोको आदेश दिन्छन् ती सबै बुद्धिमत्ता पूर्ण हुन्छन् । यदि कसैलाई अल्लाहसंग केहि माग्नु छ भने सीधा उनैसंग माग्नु पर्छ कसैको माध्यमबाट माग्न जरूरी छैन । अल्लाह र उसको सहायता माग्नेको बीचमा कोहि मध्यस्थ चाहिदैन । अल्लाहले मानवरूप धारण गर्छन् भन्ने कुरा इस्लामले मान्दैन । यस्तो विश्वास गर्नु अल्लाहको निन्दा गर्नु ठहरिन्छ । अल्लाह प्रशंसनीय छन् सम्पूर्ण छन् । उनी कहिल्यै थाक्दैनन् । उनलाई निद्रा लाग्दैन, उनी कहिल्यै सुत्दैनन् । अरबी भाषाको "अल्लाह" भन्ने शब्दको अर्थ हो ईश्वर, एकमात्र र सत्य ईश्वर जसले सम्पूर्ण ब्रहृमाण्डको सृष्टि गरे । यो शब्द जसको स्त्रीलिङ्ग पनि

छैन र बहुबचन पनि, एकमात्र र साँचो ईश्वरलाई भन्दा बाहेक अरू केहि जनाउँदैन । कुरआनमा यो अल्लाह भन्ने शब्द २१५० भन्दा बढी पटक प्रयोग गरिएको छ ।

## ख. फरिश्ता (दूत) हरूमाथि आस्था

मुसलमानहरू फरिश्ताहरूमाथि विश्वास गर्छन् । यो विश्वास कि यी फरिश्ताहरू सम्मानित सृष्टि हुन् । यिनीहरू एकमात्र अल्लाहको भक्ति गर्छन्, उनको आज्ञापालन गर्छन् र एकमात्र अल्लाहको आदेशानुसार काम गर्नु उनीहरूको दिनचर्या हो । यी फरिश्ताहरू मध्ये जिब्रईल (अ.) एक हुन् जसले मुहम्मद (स.) सम्म कुरआन ल्याइदिने काम गरे ।

## ग. ईश्वरीय ग्रन्थहरूमाथि आस्था

मुसलमानहरूको विश्वास छ कि मानव जातिको मार्गदर्शनका लागि र पैगम्बर (सन्देष्टा) हरूको प्रमाणचिन्हको रूपमा ती पैगम्बर मार्फत अल्लाहले आफ्ना पुस्तकहरू पठाए । यी पुस्तकहरूमध्ये कुरआन एक हो जुन मुहम्मद (स.) समक्ष पठाइयो । अशुद्धता र अर्थ बिगार्ने संभावित कुचेष्टाबाट कुरआनको रक्षा गर्ने जिम्मा अल्लाहले स्वयं लिएका छन् । अल्लाह भन्छन् :

**"वास्तवमा हामीले कुरआन पठाएका हौं र हामी नै यसको (अर्थ बिगार्ने कुचेष्टाबाट ) सुरक्षा गर्नेछौं ।" -कुर आन,१५:९)**

## घ. अल्लाहका पैगम्बर (सन्देशवाहक) हरूमाथि आस्था

मुसलमानहरू अल्लाहका पैगम्बरहरूमाथि विश्वास गर्छन् । यी पैगम्बरहरू मध्ये आदम, नूह, ईब्राहीम, ईस्माईल, ईसहाक, याकूब, मूसा (Moses) र ईसा (Jesus) (उनीहरू सबैमाथि शान्ति होस्) पनि पर्दछन् । तर मानवको लागि अल्लाहको अन्तिम र निर्णायक सन्देश मुहम्मद (स.) द्वारा पठाइयो । यो अपरिवर्तनशील ईश्वरीय सन्देशको पुनर्पुष्टिकरण पनि हो । मुसलमानहरूको विश्वास छ कि मुहम्मद (स.) अल्लाहका अन्तिम पैगम्बर हुन् । अल्लाह भन्छन् :

**"मुहम्मद (स.) तिमीहरूमध्ये कुनै पुरुषको पिता होइनन्, तर उनी अल्लाहका पैगम्बर हुन् र उनीहरू मध्येका अन्तिम नबी हुन्......।" ( कुरआन, ३३:४०)**

मुस्लिमहरू केमा पनि विश्वास गर्छन भने पैगम्बरहरू पनि मानव नै थिए र तिनीहरूमध्ये कसैमा पनि ईश्वरको कुनै पनि ईश्वरीय गुण थिएन ।

## ङ. फैसलाको दिनमा आस्था

मुसलमानहरू फैसलाको दिनमाथि विश्वास गर्छन् । त्यस दिनमाथि जुन दिन मानिसहरूको पुनर्जन्म हुनेछ र अल्लाहले आस्था र कर्मअनुसार तिनीहरूलाई पुरस्कृत अथवा दण्डित गर्नेछन् ।

## च. भाग्यमा आस्था

मुस्लिमहरूले भाग्यमाथि पनि विश्वास गर्छन् । यो भाग्य भनेको घटनाहरूका बारेमा ईश्वरीय पूर्व-निर्णय हो जो घटेरै छाड्नेछ । तर यसको यो अर्थ कदापि होइन कि मानिसहरूलाई इच्छा र कार्य-स्वतन्त्रता छैन । मुसलमानहरूको त यसमा दृढ आस्था छ कि मानिसहरूलाई अवश्य पनि इच्छा र कार्य-स्वतन्त्रता दिइएको छ । तसर्थ उनीहरू राम्रो र खराबमध्येबाट आफ्नोलागि जुनै पनि बाटो रोज्न स्वतन्त्र छन् र यसको सम्पूर्ण दायित्व पनि उनैको हुनेछ । भाग्य र ईश्वरीय पूर्व-निर्णयमाथि आस्थाको अर्थ चारवटा कुराहरूमा विश्वास गर्नु हो :

(१) अल्लाहलाई सबै कुरा थाहा छ। के घटिसक्यो उनलाई थाहा छ, भविष्यमा के घट्नेवाला छ त्यो पनि उनलाई थाहा छ। (२) भूतमा घटीसकेका र भविष्यमा, फैसलाको दिनसम्ममा, के घट्नेवाला छ ती सबैको लेखा अल्लाहले तयार पारेर राखिरहेका छन्। (३) अल्लाहले जे इच्छा गर्छन् त्यही हुन्छ र उनले इच्छा नगरेको केहि हुन सक्तैन, र (४) अल्लाह नै सबै कुराका सृष्टिकर्ता हुन्।

## (३) के कुरआनका अतिरिक्त ज्ञानका अन्य शुद्ध स्रोतहरू छन् ?

छन्! सुन्नत (पैगम्बर मुहम्मद (स.) ले भनेका, गरेका र स्वीकृति दिएका कार्य र कुराहरू) इस्लामको ज्ञानको दोस्रो स्रोत हो। सुन्नत हदीसहरूले बनेको हो। हदीस भनेको : पैगम्बर मुहम्मद (स.) का साथीहरूका ती कथनहरू हुन् जुन उनीहरूले मुहम्मद (स.) को काम, भनाई अथवा सहमति भनेर अत्यन्त विश्वसनीय तरीकाबाट रिपोर्ट गरेका हुन्। सुन्नत माथिको विश्वास इस्लामका मूल आस्थाहरू मध्येको एक हो।

## (४) पैगम्बर मुहम्मद (स.) का भनाईहरूको उदाहरण

– "इस्लाममाथि तिमीहरूको आस्था त्यतिञ्जेलसम्म पूर्ण मानिने छैन जबसम्म तिमीहरूले आफ्ना साथी भाईका लागि त्यही कुरो मन पराउदैनौं जुन कुरो स्वंय आफ्नो लागि मन पराउछौं २।"

– "…….साथीभाईतिर मुस्काएर हेर्नु पनि एउटा दान हो३।"

– "…. मीठो बोली बोल्नु पनि एउटा दान हो४।"

– "अल्लाहमाथि र फैसलाको दिनमाथि विश्वास गर्नेहरूले आफ्ना छिमेकीहरूसित सद्व्यवहार गर्नुपर्छ ५।"

– "ईमान्दार र विश्वसनीय (मुस्लिम) व्यापारी (फैसलाको दिनमा) पैगम्बरहरूसंग हुनेछन् ६।"

– "अल्लाहले तिम्रो मूल्याङ्कन रूप र सम्पत्ति हैन तिम्रो मन र कामहरू हेरेर गर्नेछन् ७।"

– "बीर भनेको त्यो व्यक्ति हैन जसले आफ्नो प्रतिद्वन्दीलाई धाराशायी गर्छ। वास्तवमा शक्तिशाली त त्यो व्यक्ति हो जसले रीस उठेका बेला आफूमाथि नियन्त्रण राख्न सफल हुन्छ८।"

– "हिँडी राखेको बेला एकजनाले बाटोमा एउटा काँढा भएको हाँगा देख्यो। त्यसले त्यो हाँगा बाटोदेखि पर लगेर फ्याँकिदियो (यात्रुहरूलाई नबिझोस् भनेर) (यसको लागि) अल्लाहले उसलाई धन्यवाद दिए र उसका पापहरू क्षमा गरिदिए९।"

– "मजदूरको ज्याला उसको पसीना सुक्नु भन्दा अगावै चुक्ता गरिदेऊ१०।"

– "हिंडीराखेको बेला एकजनालाई साह्रो तिर्खा लाग्यो। एउटा इनारनिर पुगेर त्यसले त्यहााबाट टन्न पानी खायो। हिंड्न लाग्दा उसले एउटा कुकुर देख्यो। तिर्खाएको त्यस कुकुरले हिलो चाटेर आफ्नो तिर्खा मेटाउने प्रयास गर्दैरहेछ। त्यस मानिसले सोच्यो यस कुकुर लाई पनि मलाई जस्तै तिर्खा लागेको हुनु पर्छ। ऊ फेरी इनारसम्म पुगेर आफ्नो जुत्तामा पानी भरी त्यस कुकुरलाई खान दियो। यसका लागि अल्लाहले उसलाई धन्यवाद दिए र उसका पापहरू क्षमा गरिदिए। पैगम्बरलाई प्रश्न गरियो–हे अल्लाहका पैगम्बर, के जनावरहरू प्रति दया-माया देखाउँदा पनि पुण्य पाइन्छ ? उनले भने–जुनसुकै जीवित प्राणीप्रति दया-माया देखाउदा पुण्य पाइन्छ११।"

## (५) "फैसलाको दिन" को बारेमा कुरआन के भन्छ ?

मुस्लिमहरूको विश्वास अनुसार वर्तमान जीवन भनेको मृत्यु पछिको अर्को जीवनको तयारीको लागि हो। वर्तमान जीवन सबैका लागि परीक्षा समान हो। यस्तो एउटा समय आउने छ जब सम्पूर्ण संसार ध्वस्त हुनेछ र यसका सब प्राणीहरू मारिनेछन्। त्यसपछि

मानिसहरूले पुनर्जन्म पाउनेछन् । र तिनीहरू सबै फैसलाका लागि अल्लाहसामु ल्याइने छन् । त्यस पछिको जीवन अनन्त हुनेछ । "फैसलाको दिन"भनेको यसै दिनलाई भनिएको हो । यस दिनमा सबै मानिसहरूले आ-आफ्ना आस्था र कर्महरूका आधारमा पुरस्कार अथवा दण्ड पाउनेछन् । मृत्युपर्यन्त जसको विश्वास यसमा थियो कि "अल्लाहका अतिरिक्त भक्तियोग्य अरू कोहि छैन र मुहम्मद (स.) अल्लाहका पैगम्बर हुन्" र जो मुस्लिम थिए त्यस दिन पुरस्कृत गरी स्वर्गमा पुऱ्याइनेछन् ।

अल्लाहले भनेका छन् :

**"विश्वास गर्नेहरू र सत्कर्म गर्नेहरू स्वर्गका बासिन्दा हुन् उनीहरू त्यहाँ सदा-सर्वदा रहने छन् ।"** (कुरआन, २:८२)

तर जसको मृत्यु यस्तो अवस्थामा भयो कि ऊ मुसलमान थिएन र "अल्लाहका अतिरिक्त भक्तियोग्य कोहि छैन र मुहम्मद (स.) अल्लाहका पैगम्बर हुन्" भन्ने कुरामा पनि उसको आस्था थिएन त्यस व्यक्तिले सधैंकालागि स्वर्ग गुमाउँछ र उसलाई नर्कको आगोमा हुत्याइनेछ । अल्लाह भन्छन् :

**"र जो सुकैले इस्लामका अतिरिक्त अन्य कुनै धर्म रोज्छ, उसको तर्फबाट यो स्वीकार गरिने छैन, र ऊ मरणोपरान्त जीवनमा घाटा सहने व्यक्तिहरूमध्ये एक हुनेछ ।"** (कुरआन, ३:८५)

र उनले यो पनि भनेका छन् :

**"जसले अविश्वास गरे र अविश्वासकै अवस्थामा मृत्यु वरण गरे उनीहरूमध्ये कसैको तर्फबाट मोक्ष प्राप्तिको लागि सम्पूर्ण संसार बराबरको सुन टक्रयाइए पनि स्वीकार गरिने छैन । उनीहरूले कष्टपद्र सजायँ पाउने छन् र उनीहरूलाई मद्दत गर्ने कोही हुने छैन ।"** (कुरआन, ३:९१)

अल्लाह नै हाम्रा सृष्टिकर्ता र पालनहार हुन् । यस जमीनमाथि जे-जति छ त्यो सब उनैले हाम्रोलागि बनाइदिएका हुन् । संसारमा जे-जति राम्रा, सुन्दर बस्तुहरू छन् सबै उनैको सृष्टि हो । यति हुँदाहुँदै पनि यदि कसैले उनलाई ईश्वर मान्न अस्वीकार गर्छ, उनको पैगम्बर मुहम्मद (स.) लाई ईशदूत मान्दैन र उनको धर्म इस्लामलाई गह्रण गर्दैन भने मरणोपरान्त जीवनमा उसले सजाया पाउनु न्यायोचित नै ठहरिन्छ ।

वास्तवमा हाम्रो सृष्टिको मुख्य उद्देश्य नै एक्लो अल्लाहको भक्ति र उनको आज्ञापालन गर्नु हो । जसरी कि पवित्र कुर आनमा उनले भनेका छन् । (५१:५६)

हाम्रो अहिलेको यो जीवन अति छोटो छ । फैसलाको दिन अविश्वासीहरूलाई लाग्नेछ कि उनीहरूको सांसारिक जीवन एक दिन अथवा त्यसभन्दा पनि छोटो समय समान थियो जसरी कि अल्लाह कुरआनमा भन्छन् :

**"उनी (अल्लाह) भन्ने छन् : तिमीहरू संसारमा कति वर्षसम्म बाँच्यौ ? उनीहरूको उत्तर हुनेछ , हामी एक दिन अथवा त्यसको केंहि अंश बराबर बाचैँयौं ।"** (कर् आन, २३: ११२-११३)

अल्लाहले अर्को ठाउँमा भनेका छन् :

**"के त्यसबेला तिमीले यो सोच्यौ कि हामीले तिमीलाई खेलठट्टामा (उद्देश्यविहीन) सृष्टि गरेका थियौं र (यो सोच्यौ कि मरणोपरान्त) तिमीलाई हामीतर्फ फर्काइने**

**छैन ? यसर्थ अल्लाह महान छन्, वास्तविक महाराजा । उनको अतिरिक्त भक्ति पाउने अधिकार अरू कसैको छैन ।" (कुरआन, २३ः ११५-११६)**

यस सांसारिक जीवनको तुलना मरणोपरान्त जीवनसंग गर्दा मुहम्मद (स.) ले भनेका छन् : "औंला सागरमा चोपे र बाहिर ल्याउँदा जति पानी आउँछ , मरणोपरान्त जीवनको तुलनामा यस संसारको मोल त्यति नै हो १२ ।" अर्थात सागरको तुलनामा पानीका केहि थोपाहरूको जति मूल्य हुन्छ मरणोपरान्त जीवनको तुलनामा यस सांसारिक जीवनको मूल्य त्यति नै हो ।

पूर्ण आस्था र विश्वासका साथ "ला इलाहा इल्लल्लाह मुहम्मदुर-रसुलुल्लाह" भने पछि मात्र सही अर्थमा मुसलमान होइन्छ । यस भनाईको अर्थ हो–"एक मात्र अल्लाहका अतिरिक्त भक्ति योग्य अरू कोहि छैन र मुहम्मद (स.) अल्लाहका पैगम्बर (सन्देष्टा) हुन् ।"

मुसलमानहरूले यी कुराहरूमा आस्था राख्न पनि जरूरी छ कि–

– पवित्र कुरआन अल्लाहद्वारा अवतरित उनकै शब्दहरू हुन् ।

– अल्लाहको घोषणानुसार फैसलाको दिन अवश्य आउने छ ।

## (६) कुनै व्यक्ति मुस्लिम कसरी बन्न सक्छ ?

राम्ररी अर्थ बुझेर पूर्ण आस्था र विश्वासका साथ "ला इलाहा इल्लल्लाह मुहम्मदुर-रसुलुल्लाह" भन्ने बित्तिकै कुनै पनि व्यक्ति मुस्लिम बन्न सक्छ । यस वाक्यांशको अर्थ हो "अल्लाहबाहेक पूजनीय अरु कोहि छैन र मुहम्मद (स.) अल्लाका रसूल (सन्देष्टा) हुन् ।" यस वाक्यांशको पहिलो खण्ड "अल्लाह बाहेक पूजनीय अरु कोहि छैन" भन्नुको अर्थ हो केवल अल्लाहका सामु नतमस्तक हुनु जायज छ, उनका अतिरिक्त अरु कसैको पूजा-अर्चना गर्नु हुँदैन । अल्लाहको शक्ति र अधिकारमा कसैलाई पनि साझेदार अथा समकक्षी मान्न सकिदैन । मुस्लिम बन्नलाई निम्न कुरा पनि जरुरी छ :

– यस कुरामा विश्वास गर्नु कि कुरआन अल्लाहद्वारा अवतरित उनकै वाणीको संग्रह हो ।

– यस कुरामा विश्वास गर्नु कि अल्लाहले कुरआनमा घोष्णा गरेअनुसार कयामत (हिसाब किताब, लेखाजोखा र निर्णयको अन्तिम दिन) अवश्य कायम हुनेछ ।

– इस्लामलाई आफ्नो धर्मको रुपमा अङ्गीकार गर्नु ।

– अल्लाहका अतिरिक्त कुनै पनि वस्तु अथवा व्यक्तिको पूजा नगर्नु ।

मुहम्मद (स.) ले भने, "क्षमायाचना र प्रायश्चित गरेर अल्लाहको शरणमा फर्किनु अल्लाहलाई औधि मन पर्छ । तिमीहरू मध्ये कोहि अनकण्टार मरु भूमिमा आफ्नो एकमात्र ऊँट हराएको कल्पना गर । निराश भई रुखको फेदमा मृत्युको प्रतीक्षा गरिरहँदा एक्कासी त्यो ऊँट साक्षात् उपस्थित भइ दियो भने तिमी कति प्रसन्न हुन्छौं

अल्लाह पनि तिम्रो प्रायश्चित र क्षमायाचनाको अनुनय विनय सुन्दा त्यति नै प्रसन्न हुन्छन् (र तिमीलाई क्षमा प्रद्रान गरी तिमीसँग प्रेम गर्छन् ) ।"

"ला इलाहा इल्लल्लाह मुहम्मदुर-रसुलुल्लाह" भन्ने बित्तिकै कुनै पनि व्यक्ति मुस्लिम बन्न सक्छ । यस वाक्यांशको अर्थ हो "अल्लाहबाहेक पूजनीय अरु कोहि छैन र मुहम्मद (स.) अल्लाका रसूल (सन्देष्टा) हुन् ।"

## (७) कुरआन के हो ?

अल्लाहद्वारा पठाइएको अन्तिम किताब कुरआन, मुसलमानहरूको आस्था, उनीहरूको आचरण र व्यवहारको मुख्य स्रोत हो । यसमा मानवजीवनसंग सम्बन्धित सबै विषयहरूको चर्चा गरिएको छ, जस्तै– बुद्धिमत्ता, सिद्धान्त, कानून, प्रार्थना, व्यापार, लेनदेन इत्यादि । तर यसको आधारभूत विषय अल्लाह र उनको सृष्टिको विचको अन्तर-सम्बन्ध हो । साथै यसले एउटा न्यायपूर्ण समाज, उचित मानव आचरण, समान आर्थिक व्यवस्था स्थापनाका निमित्त मार्गदर्शन र विस्तारित विधि-ज्ञान प्रदान गर्दछ ।

उल्लेखनीय छ कि कुरआन अल्लाहबाट मुहम्मद (स.) समक्ष अरबी भाषामा पठाइएको थियो । तसर्थ कुरआनको अनुवाद जुनसुकै भाषामा किन नहोस् वास्तविक कुरआन हैन त्यसको अर्थको अनुवाद मात्र हो ।

## (८) मुहम्मद (स.) को हुन् ?

मुहम्मद (स.) सन् ५७० ई. मा सऊदी अरबको मक्कामा जन्मिएका थिए ।
उनको जन्म हुनु भन्दा अगावै उनको पिताको र ६ वर्षको आयु हुँदा माताको निधन भएको हुनाले उनको पालनपोषण काकाले गरे । उनको काका "कुरैश" नामक एउटा प्रतिष्ठित वंशका सदस्य थिए । मुहम्मद (स.) को शिक्षा-दीक्षाको व्यवस्था गरिएन, उनी पढ्न लेख्न जान्दैनथे र जीवनको अन्तिम घडीसम्म उनी अनपढ नै रहे । ठूलो भएपछि उनी एकजना सत्यवादी, विश्वासिलो, उदार र निष्कपट व्यक्तिका रूपमा चर्चित हुन थाले । उनी सानो बेलादेखि नै धार्मिक प्रवृत्तिका थिए तर त्यतिखेरको समाजमा व्याप्त मूर्तिपूजा र चारित्रिक पतनदेखि उनलाई घृणा थियो ।

ईश्वरीय दूत्त पैगम्बर मुहम्मद (स.) को मस्जिद मदीना मा ।

चालीस वर्षको उमेरमा मुहम्मद (स.) ले जिब्रईल फरिश्ताको माध्यमबाट अल्लाहको पहिलो सन्देश प्राप्त गरे । यी सन्देशहरू आउने क्रम त्यसपछि २३ वर्षसम्म जारी रह्यो । यी सन्देशहरूको एकत्रित रूप नै कुरआन हो ।

कुरआन सुनाउन र त्यसमा निहीत ईश्वरीय शिक्षाहरूको उपदेश अरूहरूलाई दिन आरम्भ गर्ने बित्तिकै अविश्वासीहरू वहाँ र वहँका साथीहरूको सानो समूह माथि खनिन थाले । अत्याचार र यातना दिनप्रतिदिन बढ्दै गयो । अति नै भइसकेपछि सन् ६३२ मा अल्लाहले उनीहरूलाई देश-त्याग गरी अन्तै जान आदेश दिए । सोही आदेशानुसार पैगम्बर मुहम्मद (स.) मक्का छाडी २६० कि.मी. उत्तरमा स्थित मदीना भन्ने नगरतिर प्रस्थान गरे । यो ऐतिहासिक घटना नै इस्लामीक कैलेण्डरको शुरूआत मानिन्छ ।

केहि वर्षपछि मुहम्मद (स.) र उनका अनुयायीहरू मक्का फर्किन समर्थ भए ।

मुहम्मद (स.) ले आफ्ना पूर्व शत्रु मक्का बासीहरूलाई क्षमा गरिदिए । ६३ वर्षको आयुमा उनको मृत्यु हुँदा अरब उपद्वीपको अधिकाशं भाग मुसलमान भइसकेको थियो । उनको मृत्युपछि एक शताब्दी भित्रै इस्लाम पश्चिममा स्पेन र पूर्वमा चीनसम्म फैलिसकेको थियो । यति छिटो र शान्तिपूर्ण विस्तारका कारणहरूमध्ये इस्लामको सत्यता र यसका शिक्षाहरूको स्पष्टता हुन् । इस्लामले एकमात्र अल्लाहमाथि आस्थाको आह्वान गर्छ ।

पैगम्बर मुहम्मद (स.) इमान्दार, न्यायप्रेमी, दयालु सत्यवादी र साहसी थिए । सामाजिक कुसंस्कार र भ्रष्टचार उनमा लेस-मात्र पनि थिएन । उनको एकमात्र प्रयास अल्लाहको आज्ञापालन गरी मराणोपरान्त जीवनमा पुरस्कार आर्जन गर्नुमा केन्द्रित थियो । आफ्नो सबै काम र व्यवहारमा उनी अल्लाहलाई हमेशा सम्झिरहन्थे ।

## (९) इस्लामको बिस्तारले विज्ञानको विकासमा के प्रभाव पाऱ्यो ?

इस्लामले मानिसलाई आफ्नो बुद्धि र अवलोकन शक्ति प्रयोग गर्न आह्वान गर्छ ।

इस्लामको विस्तारको केहि वर्षभित्रै महान सभ्यताहरू र विश्वविद्यालयहरू विकसित हुन थाले । पूर्वी र पश्चिमी तथा पुरानो र नयाा विचार र ज्ञानहरूको समागमबाट चिकित्साशास्त्र, गणित, भौतिकशास्त्र, खगोलशास्त्र, भुगोल, गृहनिर्माण विद्या,

कला,साहित्य र इतिहासका क्षत्रे मा ठूलो विकास भयो । कैयौं महत्वपूर्ण पद्धतिहरू जस्तै अलजेब्रा, संख्याहरू र शुन्यको धारणा (जुन धारणा गणितको विकासमा अति उपयोगी प्रमाणित भयो) मुस्लिम विश्वबाटै मध्यकालीन यूरोपसम्म पुगेका हुन् । यूरोपीय आविश्कारहरू सम्भव बनाउने उपकरणहरू जस्तै Astrolabe, Quadrant, र नौचालनका नक्शाहरू मुसलमानहरूले नै विकसित गरे ।

## (१०) यशू (ईसा अ.)को बारेमा मुस्लिमहरूको धारणा

मुस्लिमहरू यशू (ईसा) (उनीमाथि अल्लाहको शान्ति होस् लाई अत्यन्त स्नेह,सम्मान र माया गर्छन् । ईश्वरद्वारा मानवजातिका लागि पठाइएको महान सन्देष्टाहरू मध्येका एक भनेर उनीमाथि अगाध आस्था राख्दछन् । उनी पिताबिना जन्मेका थिए भन्ने कुराको कुरआन पुष्टि गर्दछ । कुरआनको एउटा अध्याय नै उनकी आमा मरियम् (Mary) को नाममा राखिएको छ । हजरत ईसा (अ.) को जन्मको वृत्तान्त कुरआनमा यसरी दिइएको छः

**"(सम्झ त्यो क्षण) जब फरिश्ताहरूले भने - हे मरियम ! अल्लाह तिमीलाई आफ्नो एउटा वचनको शुभ सूचना दिन्छन् । उनको नाम मरियमका सपूत ईसा मसीह हो, यस संसार तथा परलोक (दुवै मा सम्मानित छ र ऊ अल्लाहको अति निकट छ । ऊ मानिसहरू सित शिशु अवस्थार्दो ख नै वार्तालाप गनर्छे र वयस्क भई सकेपछि पनि, र ऊ धर्मपरायण हुने छ । उनले भनिन् -"हे प्रभू म कसरी बच्चा पाउन सक्छु जबकि मलाई कुनै पुरुषले छोएकै छैन ?" उनले भने-"यस्तै हुनेछ । अल्लाह जे चाहन्छ सृजना गर्छ । जब उसले कुनै कुरा उत्पन्न गर्न चाहन्छ, आज्ञा गर्छ "होऊ" र त्यो भई हाल्छ" (कुरआन, ३:४५-४७)**

यशू अल्लाहद्वारा चमत्कारिक रुपमा आदमलाई बनाए जस्तै पिता बिना नै बनाइएका थिए । अल्लाह भन्छन्-

**"अल्लाहको लागि यशूको उदाहरण आदम (अ.) जस्तै हो । उनले उसको उत्पत्ति माटोबाट गरे अनि उसलाई भने "होऊ" र ऊ साक्षात भई हाल्यो" ।** (कुआन, ३:५९)

सन्देष्टाको रुपमा आफनो कार्य सम्पादन गर्ने क्रममा यशूले थुप्रैचमत्कारहरू प्रदर्शन गरे । अल्लाह भन्नुहुन्छ कि यशूले भने-

**"म तिमीहरू समक्ष तिम्रो प्रभूको एउटा चिन्ह (निशानी) लिएर आएको छु । म माटोबाट एउटा चराको आकृति बनाउँछु, त्यसमा फुक्छु अनि त्यो ईश्वरको आज्ञाले साक्षात् चरा बन्दछ । म जन्मजात अन्धो र कुष्ठरोगीहरूलाई निको पार्छु । र म ईश्वरको अनुमतिबाट मरेकालाई जीवित पार्दछु । तिमीहरू जे खान्छौ र घरमा जे सञ्चय गर्छौ त्यो (पनि)**

**बताईदिन्छु ......" ।** (कुरआन, ३:४९)

मुस्लिमहरूको विश्वस छ कि ईसा (अ.) लाई सूलीमा चढाईएको थिएन । उनको शत्रुहरूको ईच्छा उनलाई सूलीमा चढाउनु थियो तर अल्लाहले उनको रक्षा गरे र उनका शत्रुहरूको योजना विफल बनाईदिए । अल्लाहले उनलाई आकाशमा उठाएर आफू समीप ल्याईपुऱ्याए ।

**एक अन्य व्यक्ति, जसको रुप ठ्याक्कै ईसा (अ.) जस्तै थियो । उसलाई सूलीमा चढाइयो । उनका शत्रुहरूले ईसा (अ.) लाई नै सूलीमा चढाइयो भन्ने भ्रम पालीराखे ।**

**अल्लाहले भनेका छन् - ".... उनले भने ! "हामीले मरियम पुत्र, अल्लाहका सन्देष्टा, ईसा मसीहलाई मारिदियौं ।" उनीहरूले उनलाई मारको हैनन् न उनलाई सूली चढाएका हुन् , बरु उनको स्वरुप अर्को व्यक्तिलाई दिइएको थियो । र उनीहरूले त्यसैलाई मारेका हुन् ......"** (कुरआन, ४:१५७)

सबै सन्देष्टाहरूका मूलभूत सिद्धान्त र शिक्षाहरू एउटै थिए - त्यो हो एकमात्र अल्लाहको भक्ति तथा आज्ञापालन । न त मुहम्मद (स.) न हजरत ईसा (स.) नै त्यसलाई परिवर्तन गर्न आएका थिए, बरु ती दुवै तिनै मूलभूत सिद्धान्तको शिक्षा दन, तिनको नवीकरण गर्न र तिनलाई सुदृढ गर्न पठाईएका थिए ।

## (११) इस्लाम र आतंकवाद

इस्लाममा आतकंवादको अनुमति छैन । कुरआनमा अल्लाह भन्छन् :
**“अल्लाह तिमीलाई रोक्दैनन् दयाभावना देखाउन र न्यायोचित व्यवहार गर्नबाट उनीहरूप्रति जसले तिमीहरूविरूद्ध धर्मको मामिलामा युद्ध गरेका छैनन् र जसले तिमीहरूलाई घरबाट खेदेका छैनन् ।” (कुरआन, ६०:८)**
मुहम्मद (स.) आफ्ना सैनिकहरूलाई स्त्री र बच्चाहरूलाई मार्नबाट रोक्दथे१३ । सैनिकहरूलाई उनको सल्लाह हुन्थ्यो “........ धाको नदिनु अत्याचार नगर्नु नवजात शिशुलाई नमार्नु १४ ।” उनले यो पनि भन्थे, “त्यस व्यक्तिले स्वर्गको सुगन्ध कहिल्यै पाउने छैन जसले यस्तो व्यक्तिलाई मारेको होस् जसको मुसलमानहरूसंग सन्धि भएको थियो १५.......।”
यसका अतिरिक्त आगोले पोली सजाया दिने पद्धति पनि मुहम्मद (स.) ले वर्जित गरेका छन्१६ ।
महापापहरू मध्येका दोस्रो भनेर मुहम्मद (स.) ले हत्यालाई औंल्याएका छन्१७ “फैसलाको दिनमा मानिसहरूका बीच सर्वप्रथम ल्याइने मुद्दा रक्तपातको हुनेछ१८ ।”
मुसलमानहरूलाई जनावरहरूप्रति समेत दयाभावना देखाउन प्रोत्साहित गरिएको छ । मुहम्मद (स.) ले भने, “एकजना आईमाईलाई सजाय दिइयो किनभने उसले एउटा बिरालोलाई नमरूञ्जेल बाँधिराखेको थियो । यस अपराधमा त्यस आईमाईलाई नर्कमा पठाइने भयो । बाँधेको अवस्थामा उसले खाना र पानी पनि दिइएन न त त्यस बिरालोलाई आफै शिकार गरी खान स्वतन्त्र नै गरियो१९ ।”
खानको लागि कुनै जन्तुको वध गर्दा सबभन्दा अकष्टकर तरीका अपनाउन मुसलमानहरूलाई निर्देशन दिइएको छ । मुहम्मद (स.) ले भनेका छन्: “(खानको लागि)
कुनै जन्तुको बध गर्दा सबभन्दा राम्रो विधि प्रयोग गर्नु । जन्तुलाई कष्ट न्यूनतम होस् भन्ने उद्देश्यले चक्कू राम्ररी धारिलो बनाउनु२० ।”

यसबाट र यस्तै किसिमका अन्य इस्लामी लेखहरूबाट के प्रष्ट हुन्छ भने असहाय जनसाधारणलाई भयभीत र आतंकित तुल्याउनु, भवन र सम्पत्तिलाई क्षति पुऱ्याउनु, बम बिस्फोटद्वारा सर्वसाधारणको ज्यान लिनु आदि कार्यहरूको इस्लाम र मुसलमानहरूले भत्सर्ना गर्छन् । मुसलमानहरू शान्ति, दया र क्षमादान दिने धर्मको अनुसरण गर्छन् र अधिकांशको ती हिंसापूर्ण गतिविधिहरूसंग कुनै सम्बन्ध छैन जुन मुसलमानहरूसंग जोडिएको भनेर कसै कसैले प्रचार गर्न खोज्दैछन् ।

## (१२) इस्लाममा मानवाधिकार र सामाजिक न्याय

इस्लामले व्यक्तिलाई अनेकौं मानवाधिकार प्रदान गर्छ । ती मध्ये केहि अधिकारहरू निम्नलिखित हुन् :

– इस्लामी राज्यभित्र मुस्लिम वा गैरमुस्लिम सबै नागरिकहरूको ज्यान र सम्पत्ति सम्मानित र रक्षायोग्य मानिन्छ ।

– इस्लामले नागरिकहरूको इज्जतको रक्षालाई विशेष महत्व दिन्छ । त्यसैले गाली गर्नु र कसैको खिसी गर्नु इस्लाममा वर्जित र निन्दनीय छ ।

– जातिवाद (Racism) लाई इस्लामले निरूत्साहित गर्छ । कुरआनमा मानव गुणहरूका बारेमा भनिएको छ :

**“हे मानवजाति, हामीले तिमीलाई एकजना पुरुष र महिलाबाट सृष्टि गऱ्यौं र तिमीहरूका राज्यहरू र वंशहरू बनायौं ताकि तिमीहरूले एकअर्कालाई चिन्न सक । निस्सन्देह तिमीहरूमध्ये सर्वश्रेष्ठ व्यक्ति त्यो हो जसको मनमा अल्लाहको प्रेम र उनको भय सबभन्दा बढी छ । वास्तवमा अल्लाह सवर्ज्ञानी र सर्व- सचेत छन् ।”** (कुरआन, ३९:१३)

– धनसम्पत्ति, शक्ति-सम्मान र जाति-वर्णका आधारमा व्यक्ति र राष्ट्रहरूबीच विभेद र पक्षपात इस्लामले अस्वीकार गर्छ । अल्लाहले सबै मानिसलाई एक समान सृष्टि गरेका छन् । तिनीहरू बीच कुनै अन्तर छ भने त्यो केवल उसको आस्था, धर्मनिष्ठा र सत्कर्मका आधारमा गर्न सकिन्छ । पैगम्बर मुहम्मद (स.) ले भनेका छन्:

“तिमीहरू सबैका अल्लाह एक हुन् र तिमीहरूका पूर्वज पनि एक हुन् (अर्थात् आदम (अ.) । कुनै अरब व्यक्ति गैर अरब व्यक्तिभन्दा श्रेष्ठ छैन र कुनै गैर अरब व्यक्ति अरब व्यक्ति भन्दा श्रेष्ठ छैन र कुनै रातो (गोरा) व्यक्ति कालो व्यक्तिभन्दा श्रेष्ठ छैन र कुनै कालो व्यक्ति रातो (गोरा) व्यक्तिभन्दा श्रेष्ठ छैन । यदि तिमीहरूको बीचमा कुनै अन्तर छ भने त्यो हो सत्कर्म र धर्मष्ठिामा श्रेष्ठता । जसमा यी गुणहरू बढी छन् त्यही नै सर्वश्रेष्ठ हो२१ ।”

आज मानव समाजले भोगिराखेका प्रमुख समस्याहरूमध्ये जातिवाद (Racism) एक हो । विकसित विश्व मानवलाई चन्द्रसम्म पठाउन सफल भइसक्यो तर एउटा मानिसलाई आफू जस्तै अर्को एक मानिससगं घृणा र हत्या गर्नबाट रोक्न सकेको छैन ।

जातिवादको यो समस्या निर्मूल पार्ने स्पष्ट उदाहरण मुहम्मद (स.) को समयदेखि नै इस्लामले देखाइआएको छ । मक्काको वार्षिक हज (तीर्थयात्रा) जसमा विश्वभरिबाट करीब २० लाख मुसलमानहरू भेला हुन्छन्, ले जाति र राष्ट्रहरूबीचको इस्लामी भातृत्वको अभुतपूर्व नमुना प्रस्तुत गर्दै आएको छ ।

## (१३) इस्लाममा नारीको स्थान

इस्लामले विवाहिता वा अविवाहिता दुवै थरीका नारीहरूलाई सम्पत्ति आर्जन गर्न र खर्च गर्न सक्ने पूर्ण अधिकार प्राप्त एउटा सम्पूर्ण व्यक्तित्वको रूपमा देख्छ ।

उसलाई किन्ने र बेच्ने उपहार दिने र दान गर्ने र आफ्नो पैसा इच्छानुसार खर्च गर्ने पूर्ण अधिकार दिइएको छ । विवाहमा बेहुलाले उपहारस्वरूप दिएको लुगाफाटा, गहना तथा पैसा (मेहर)२२ बेहुलीको निजी सम्पत्ति ठहरिन्छ । विवाहपछि बेहुलीको पारिवारिक नाम परिवर्तन गराई बेहुलाको पारिवारिक नाम धारण गर्नु पर्दैन , साबिककै पारिवारिक नाम रहिरहन्छ । नारी र पुरूष दुवैले सभ्य र शिष्ट लुगा लगाउनु इस्लामी आचार संहिताको एक अंग हो । पत्नीसंग मधुर व्यवहार गर्न इस्लामले पतिहरूलाई प्रोत्साहित गर्छ । मुहम्मद (स.) ले भनेका छन् "तिमीहरूमा सर्वश्रेष्ठ व्यक्ति त्यो हो जसको आफ्नी पत्नीप्रतिको व्यवहार सर्वश्रेष्ठ हुन्छ"२३ ।

इस्लाममा आमाहरूको स्थान अत्यन्त सम्मनित मानिन्छ । उनीहरूसंग अत्यधिक आदर, सम्मान र स्नेहपूर्ण व्यवहार गर्नुपर्ने इस्लामको आह्वान हो । एकजना व्यक्तिले

मुहम्मद (स.) लाई प्रश्न गरे, "हे पैगम्बर ! मेरो सद्व्यवहार पाउन सबभन्दा उपयुक्त र योग्य व्यक्ति को हो ?" पैगम्बर (स.) को उत्तर थियो, "तिम्री आमा ।" त्यस व्यक्तिले पुनः

सोधे, "त्यसपछि को ?", मुहम्मद (स.) ले पुनः जवाफ दिए, "तिम्री आमा ।" उनले फेरि सोधे, "अनि को ?" मुहम्मद (स.) को जवाफ थियो, "अनि तिम्री आमा ।" उनले फेरि पनि त्यही प्रश्न दोहोऱ्याए, "त्यसपछि को ?" मुहम्मद (स.) ले भने, "त्यसपछि तिम्रो बुबा२४ ।"

## (१४) इस्लाममा परिवार

मानव सभ्यताको मूल इकाई परिवार, अहिले छिन्न भिन्न भइराखेको छ ।

इस्लामको पारिवारिक व्यवस्थाले पति, पत्नी, बच्चाहरू र अन्य सम्बन्धितहरूका अधिकारहरूबीच सुन्दर सामञ्जस्यता ल्याउाछ। **यस**ले निस्वार्थ व्यवहार, उदारता र प्रेम भावनालाई प्रोत्साहित गरी एउटा सुसंगठित पारिवारिक व्यवस्था प्रदान गर्छ।
इस्लामको दृष्टिमा एउटा स्थिर परिवारको ठूलो महत्व छ र परिवारका सदस्यहरूको आध्यात्मिक विकासको लागि यसलाई अपरिहार्य मानिएको छ। विस्तारित परिवार र
त्यसमा बच्चाहरूको उपस्थितिले एउटा मधुर सामाजिक परिवेशको सृजना गर्छ।

## (१५) वृद्धहरूप्रति मुस्लिमको व्यवहार

मुस्लिम जगतमा “वृद्ध-आवास” (Old Peoples' Homes) बिरलै देख्न पाइएला। जीवनको सबभन्दा कठिन यस उमेरमा वृद्ध मातापिताको सेवा गर्दा हुने कष्ट र असुविधालाई इस्लाममा सम्मान र सौभाग्यका रूपमा लिइन्छ र आध्यात्मिक विकासको सुनौलो मौका भनरे यसको स्वागत गरिन्छ। इस्लाममा मातापिताको लागि प्रार्थना गर्नु मात्र पर्याप्त मानिदैन। बाल्य अवस्थामा असहाय भएको बेला आफ्नो सुखलाई हाम्रो सुखमाथि बलिदान गरेको सम्झिँदै हामीले अति सहनशीलता देखाउँदै उनीहरूको सेवा गर्नुपर्छ भन्ने इस्लामको शिक्षा हो। आमालाई त झन् विशिष्ट स्थान दिइएको छ। मुस्लिम मातापिताहरू वृद्धावस्थामा पुगेपछि उनीहरूसंग अति दया र नि:स्वार्थताको व्यवहार गरिन्छ।
इस्लाममा मातापिताको सेवा गर्नु सन्तानको कर्तव्य र मातापिताले सोको अपेक्षा राख्नु उनीहरूको अधिकार हो। यस सेवा-कार्यमा सन्तानद्वारा लेसमात्र विरक्ति प्रदर्शन पनि घृणीत मानिन्छ। अल्लाहले भनेका छन्,

**“तिम्रो प्रभुले आज्ञा दिएका छन् कि उनको अतिरिक्त अरू कसैको भक्ति नगर्नु र आफ्नो मातापिताप्रति दयाभाव देखाउनु। उनीहरूमध्ये एकजना वा दुवै जना बुढेसकालमा पुगेपछि दुर्वाक्य नबोल्नु र उनीहरूलाई कहिले नझपार्नु। बरू सम्मानपूर्वक कुरा गर्नु। र उनीहरूसंग नम्र र दयापूर्ण व्यवहार गर्नु। उनीहरूको लागि प्रार्थना गर्नु “मेरा प्रभु उनीहरूमाथि दया गर्नुहोस् जसरी उनीहरूले बाल्यावस्थामा मेरो पालनपोषण गरे।”** (कुरआन, १७:२३-२४)

## (१६) इस्लामका पाँच स्तम्भहरू

इस्लामका पाँच स्तम्भहरू मुस्लिम जीवनका आधारशिला मानिन्छन्। यी स्तम्भहरू हुन् आस्थाप्रदर्शन, नमाज (प्रार्थना), जकात (दान), रमजान महिनाको रोजा (ब्रत) र आर्थिक र शारीरिक रूपले सक्षम व्यक्तिद्वारा मक्काको हज ( तीर्थयात्रा)।

## क. आस्था प्रदर्शन

आस्था प्रदर्शन भने को दृढ विश्वासका साथ यो उच्चारण गर्नु हो “ला इलाहा इल्लल्लाह, मुहम्मदुर-रसूलुल्लाह” अर्थात “अल्लाह बाहेक पूजनीय अरू कोहि छैन र मुहम्मद (स.) अल्लाहका रसूल (सन्देष्टा) हुन् ।” यस आस्था प्रदर्शनलाई “शहादत”भनिन्छ । अर्थ बुझीकन दृढ आस्था र पूर्ण विश्वासका साथ यसको उच्चारण नगरेसम्म कुनै व्यक्ति मुसलमान बन्न सक्तैन किनभने यो आस्थाप्रदर्शन नै इस्लामको सबभन्दा महत्वपूर्ण स्तम्भ हो ।

## ख. नमाज (प्रार्थना)

मुसलमानहरूले दिनको पााच पटक प्रार्थना गर्छन् जसलाई नमाज भनिन्छ । प्रत्येक पटक नमाज पढ्न करीब ५-१५ मिनटसम्म समय लाग्छ । यसै नमाजलाई अल्लाह र भक्तको बीचमा सीधा सम्पर्क स्थापित गर्ने माध्यमको रूपमा लिइन्छ । यो सम्पर्क स्थापित गर्न मध्यस्थको रूपमा कुनै तेस्रो व्यक्ति (जस्तै पुरोहित, धर्मगुरू आदि) को आवश्यकता इस्लाममा छैन ।

नमाजमा आन्तरिक सुख, शान्ति र आनन्द पाइन्छ । अल्लाह प्रसन्न भए भन्ने भावना भक्तको मनमा जाग्छ । पैगम्बर मुहम्मद (स.) ले भनेका छन् : “हे बिलाल,आऊ नमाजबाट आनन्द प्राप्त गरौं२५।” बिलाल नाम गरेका व्यक्ति मुहम्मद (स.) का एकजना साथी थिए जसको दायित्व थियो अजान दिनु ( नमाजको लागि ठूलो स्वरमा भक्तहरूलाई डाक्नु ।

नमाजका समयहरू हुन्: प्रात:काल (मिर्मिरे उज्यालेको समय), मध्यान्हपछि, मध्य-अपरान्ह, सूर्यास्तपछि र राती । खेत, अफिस, दोकान, कलेज, अस्पताल, फैक्ट्री आदि जहाँसुकै पनि नमाज पढ्न सकिन्छ ।

## ग. जकात (दान)

संसारमा जे छ त्यो सब अल्लाहको हो । मानिस सम्पत्तिको मालिक हैन त्यसको रक्षक मात्र हो । इस्लामले यही सिकाउाछ । “जकात”का दुई शाब्दिक अर्थ छन्– ”चोखो पार्नु ”र “वृद्धि” । जकात दिनु भनेको सम्पत्ति विशेष को एउटा निश्चित अशं निर्धारित वर्गका अभावग्रस्त व्यक्तिहरूलाई दिनु हो । करीब ८५ ग्राम र त्यसभन्दा बढी सुन अथवा त्यसको मूल्यसमान चाँदी वा पैसा एक वर्षसम्म कसैको स्वामित्वमा रहेको भए २.५% का हिसाबले जकात दिनुपर्छ । यो सानो अंश गरीब दु:खीहरूका लागि खर्च गर्दा हाम्रो सम्पत्तिको शुद्धीकरण हुन्छ । यो रूख बिरूवाको हाँगाबिङ्गा काटेर छाँट्नु जस्तै हो जसले विकासलाई सन्तुलित पार्छ र नयाँ वृद्धिलाई प्रोत्साहन दिन्छ । यो २.५% भनेको अनिवार्य मात्रा हो । दिन चाहनेले यसभन्दा बढी पनि दिन सक्छन् जुन प्रशसंनीय छ । तर त्यो जकातको शब्दावलीभित्र पदर्नै ।

## घ. रमजान२६ महिनाको रोजा (ब्रत)

प्रत्येक वर्ष रमजानको महिनामा मुसलमानहरू प्रातः कालदेखि सूर्यास्तसम्म खानपिन र सम्भोग गर्दैनन् । यसलाई रोजा भनिन्छ ।
रोजा स्वास्थ्यको लागि पनि निकै लाभकारी छ तर यसको मुख्य उद्देश्य आध्यात्मिक शुद्धीकरण हो । छोटो समयकै लागि भए पनि "भोक" को पीडाको अनुभव गरेपछि ती गरीब व्यक्तिहरू प्रति दयाको भावना जागेर आउँछ जो निर्धनताका कारणले प्रायः भोकै बस्न बाध्य छन् । यसरी धनी र गरीबका बीचको सम्बन्धमा मधुरता र सहयोगमा बृद्धिको सम्भावना विकास हुन्छ । तर अघि नै भनिए जस्तो रोजाको मुख्य उद्देश्य र उपादेयता व्यक्तिको आध्यात्मिक शान्ति र विकास नै हो ।

## ङ. मक्काको हज (तीर्थयात्रा)

मक्काको वार्षिक हज ती मुसलमानमाथि अनिवार्य (फर्ज गरिएको छ जसको शारीरिक र आर्थिक अवस्था यस योग्य छ । संसारभरिबाट करीब २० लाख मुसलमानहरू प्रतिवर्ष यो यात्रा गर्छन् । यो इस्लामी कैलेण्डरको बाह्रौं महिनामा हुन्छ । हज यात्रीहरू साधारण र एक समान लुगा लागाउँछन् जसले मानव-मानव बीचको कृत्रिम वर्गभेद र सांस्कृतिक भिन्नता मेटाइदिन्छ र अल्लाह समक्ष सबै समान र बराबर भएर उभिन्छन् ।
हजमा काबाको सात पटक परिक्रमा र हाजिरा (र.) ले पानीको खोजीमा लगाए जस्तो गरी सफा र मर्वा पर्वतका बीच सात चक्करहरू लगाउनु पर्छ । त्यसपछि हज यात्रीहरू अरफाको मैदानमा अल्लाहको क्षमादानको तथा अन्य कामनाहरू गर्छन् । अरफाको यो जमघटले "फैसलाको दिन" को आभास दिलाउँछ ।

हजको अन्त्य "ईद-उल-अजहा" नामक चाडको रूपमा हुन्छ । यो चाड नमाज पढेर मनाइन्छ । यो र रमजानको अन्तमा मनाईने "ईद-उल-फित्र" उत्सव इस्लामी कैलेन्डरका मुख्य चाडहरू हुन् ।

## सन्दर्भ सामग्रीहरू

(१) "सही बुखारी" नं. ५९९९ र "सही मुस्लिम" नं. २७५४
(२) "सही बुखारी" नं. १३, र "सही मुस्लिम" नं. ४५
(३) "तिर्मीर्जी" नं. १९५६
(४) "सही बुखारी" नं. २९८९, र "सही मुस्लिम" नं. १००९
(५) "सही मुस्लिम" नं. ४८ र "सही बुखारी" नं. ६०१९
(६) "तिर्मीजी" नं. १२०९
(७) "सही मुस्लिम" नं. २५६४
(८) "सही मुस्लिम" नं. २६०९, र "सही बुखारी" नं. ६११४
(९) "सही मुस्लिम" नं. १९१४
(१०) "इब्ने माजा" नं. २४४३
(११) "सही मुस्लिम" नं. २२४४, र "सही बुखारी" नं.२४६६
(१२) "सही मुस्लिम" नं. २८५८ र "मुसनद अहमद" नं. १७५६०
(१३) "सही मुस्लिम" नं. १७४४ र "सही बुखारी" नं. ३०१५
(१४) "सही मुस्लिम" नं. १७३१ र "तिर्मिजी" नं. १४०८
(१५) "सही बुखारी" नं. ३१६६ र "इब्ने माजा" नं. २६८६
(१६) "अबु दाऊद" नं. २६७५
(१७) "सही बुखारी" नं. ७८७१, र "सही मुस्लिम" नं. ८८
(१८) "सही मुस्लिम" नं. १६७८, र "सही बुखारी," नं. ६५३३
(१९) "सही मुस्लिम" नं. २४२२, र "सही बुखारी," नं. २३६५
(२०) "सही मुस्लिम" नं. १९५५ र "तिर्मिजी" नं. १४०९
(२१) "मुसनद अहमद," नं. २२९७८
(२२) विवाहको बेला बेहुलाले बेहुलीलाई (दुवै पक्षको सहमतिअनुसार) दिनुपर्ने निर्धारित राशि
(२३) "इब्ने माजा" नं. १९७८, र "तिर्मीजी" नं. ३८९५
(२४) "सही मुस्लिम" नं. २५४८, र "सही बुखारी," नं. ५९७१
(२५) "अबु दाऊद" नं. ४९८५ र "मुस्नद अहमद" नं. २२५७८
(२६) इस्लामी कैलेन्डरको नवौं महीना

@@@@@@@@@@@@

## For More Information on Islam

# इस्लाम-सम्बन्धी थप जानकारीका लागि

इस्लाम-सम्बन्धी थप जानकारीका लागि निम्न web siteहरु हेर्नुहोस् । www.islam-guide.com\ more www.islam-guide.com

"This Is The Truth" भन्ने भिडियो टेप र इस्लामसम्बन्धी अन्य जानकारीहरू दिने सामग्रीहरू निम्न संस्थाहरूबाट प्राप्त गर्न सकिन्छ :

**1. UNITED STATES OF AMERICA**

**Al-Jumuah Magazine**
P.O. Box 5387, Madison, WI 53705-5387, USA
Tel. (608) 277-1855
Fax (608) 277-0323
Email: info@aljumuah.com

**Islamic Foundation of America**
P.O.Box. 3415, Merrifield, VA 22116, USA
Tel : (703) 9144982, Fax : (703) 9144984
E-mail : ifam@erols.com

**World Assembly of Muslim Youth**
P.O.Box. 8096, Falls Church, VA 22041-8096, USA
Tel : (703) 916-0924, Fax : (703) 916-0925
E-mail : wamy@wamy.org

**Islamic Assembly of North Amercia**
3588 Plymouth Road, Suite # 270, Ann Arbor, MI 48105, USA
Tel : (734) 528-0006, Fax : (734) 528-0066
E-mail : IANA@IANAnet.org

अन्य संस्थाका लागि www.islam-guide.com/centers मा हेर्नुहोस् ।

**2. CANADA**

**Islamic Information and Da'wah Center International**
1168 Bloor Street West, Toronto, Ontario M6H 1N1, Canada
Tel. (416) 536-8433, Fax: (416) 536-1417
E-mail : comments@islaminfo.com

**3. UNITED KINGDOM**

**Jamiat Ihyaa Minhaaj Al-Sunnah**
P.O. Box. 24 Ipswich, Suffolk, IP3 8ED, UK
Tel & Fax : 44 (01473) 251578.
E-mail : mail@jimas.org

**Almuntada Al-Islami Centre**
7 Bridges Place, Parsons Green, London SW6 4HW, UK
Tel : 44 (0171) 7369060, Fax : 44 (0171) 7364255
E-mail : muntada@almuntada-alislami.org

**4. SAUDI ARABIA**

**Al Haramain Islamic Foundation**
P.O. Box. 69606, Riyadh 11557, Saudi Arabia
Tel. (9661) 465-2210, Fax : (9661) 462-3306
E-mail : haramain@alharamain.org

**World Assembly of Muslim Youth**
P.O.Box. 10845, Riydah 11443, Saudi Arabia
Tel : (9661) 464-1669, Fax : (9661) 464-1710
E-mail : wamy@kacst.edu.sa

**5. NEPAL**

**Nadwatush-shabab al islami.**
**Jarahiya, paterwa-8,janakpur dham,Dhanusha.**
**e-mail: islamuna.n@gmail.com , janaklovely@gmail.com**

**Madrasa najmul huda al salafia**
**Majhauda,Muhtari.**

**Islami Sangh Nepal**
P.O.Box. 2896, Kathmandu, Nepal
Tel : (977)-1-4226259, 4243722, Fax : (977)-1-4256912
E-mail : isangh@hotmail.com

**Millat-e-Islamia Nepal**
Ghantaghar, Kathmandu, Nepal
Tel : (977)-1-4241017
e-mail: millat@wlink.com.np
website: www.islaminnepal.com

**Al-Hera Educational Society Nepal**
P.O.Box. 154, Biratnagar, Nepal
Tel. (977)-21-521871